# तोता मैनाको कथा

## प्रथम भाग

मंगलाचरण

त्यो वृन्दावनलाई पूर्ण शशिले, शोभित् गराई दिने ।
छाडी तान अनेक मोहक मिठो, त्यो चित्त लठ्याउने ।
इच्छा पूर्ण गरे प्रसन्न मनले, आए छली गोपिनी ।
गर्दैछू म प्रणाम शुद्ध मनले, लीला बिहारी भनी ।।

यस कथाको विषयमा केही कुरा भनिरहनु पर्ने होइन, तापनि अलिकति नभनेर चित्त नबुझेको हुनाले लेख्दैछु—नीर-क्षीर न्यायले कुनै पनि स्थितिमा विज्ञजनले गुण मात्र ग्रहण गर्ने परम्परा चलिआएकै छ । त्यही परम्पराको निर्वाह गर्दै यस पुस्तकमा भएका कथा वस्तु मध्ये गुणमात्र ग्रहण गर्नु हुने सादर अनुरोध छ ।

## प्रस्तावना—

सबै भन्दा पहिले ती परब्रह्म परमात्माको चरण कमलमा वन्दना गर्दछु—जसले यो चराचर जगत आफ्ना योगबलले सृष्टि गरेर सम्पूर्ण जीवको पालन-पोषण र सुरक्षाको व्यवस्था गरेका छन्। तिनै वृन्दावन विहारीको स्मरण गरेर आफ्नू लघु मति अनुसार तोता-मैनाको कथा रसिक जनको मनोरंजन र यथा शक्ति ज्ञान प्राप्तिको निमित्त विज्ञ पाठकवर्गको सेवामा अर्पण गर्दछू।

हुन त यो कथा धेरै वर्ष पूर्व कुनै मुसलमानी देशबाट भारतमा आएको हो, तर अब त यहाँका अनेकायेक भाषाहरूमा यसको अनुवाद भएर निकै प्रचलनमा आइसकेको छ, अर्थात् तोता-मैनाको कथा नसुनेका मानिस खोजेर पाउन पनि कठिन छ। अस्तु—

निकै वर्ष अगाडि रमणीक द्वीपको नगीच एउटा सबै किसिमका फल-फूलले शोभायमान र विभिन्न जातका चरा-चुरुँगी एवं पक्षीहरूको मीठो स्वरले गुंजायमान तथा सरोवर, पोखरी, तलाउ, झरना आदिले सुशोभित देवराज इन्द्रको नन्दन बाग जस्तै वृक्षहरूले ढाकेको एउटा उपवन थियो। त्यस उपवनका अनेक वृक्षहरूमा थरि-थरिका चराहरूले आफाफ्ना

गुँड ( वासस्थान ) बनाएर मेल-मिलापका साथ बस्तथे। एक दिन साँझ पर्ने बेलामा अकस्मात् आँधी-पानीले कुटिएको थोटा सुगा आकस्मिक विपत्तिबाट आफ्नू सुरक्षा गर्न त्यहाँ आइपुग्यो र एउटा वृक्षमा बस्यो। संयोगले त्यहाँ रुखमा नाना मैनाको पनि वासस्थान थियो र उसले बसेको वृक्षमा नाना (सुगा) आएर बसेको देख्नासाथ रिसले आँखा तरेर भन्न लागी—'ए सुगा! तिमी म बसेको वृक्षमा आएर किन बसेका? यहाँबाट अहिल्यै जाऊ र कहीं अन्तै गएर बस!' मैनाको त्यस्ता कुरा सुनेर सुगाले विनयपूर्वक भन्यो—'हे मैना! मैले तिम्रो केही बिगार गरेको छैन। थोटा हाँगामा बसेको छु, आजको रात बिताएर भोलि बिहान हुनासाथ आफ्नो बाटो लाग्दछु।' सुगाको त्यस्तो कुरा सुनेर रन्किएकी मैनाले भनी—'तिमीले जतिसुकै फकाई फुलस्याइ लगाएर हजारौं पल्ट भने पनि म मान्न तयार छैन, किन भने मलाई पुरुष जातिसँग घृणा छ र म उनको विश्वास पनि मान्दिन। यस संसारमा पुरुष जातभन्दा निर्दयी र स्वार्थी अरु कोही हुन सक्तैन।' मैनाको यस्तो कठोर र चिड्ने कुरा सुनेर मनमनै रिसाएको सुगाले उत्तर दियो—'हे मैना! तिमीले यो के उल्टो कुरा गरेकी! पुरुष जातिलाई निर्दयी भन्नु त साह्रै अनुचित हो। यस संसारमा स्त्री जाति झैं निष्ठुर र माया-दया हीन कापटिनी

अरु कोही खोज पनि पाउन सक्किन्न । यस विषयमा कसैले भनेको पनि छ–

स्त्रीको हुन्छ उल्टो मति, खसम् भारी हुन्छन् सती ।
तिन्को कस्ले बुझ्छ चरित्र, हुन्छन् हजारौंतिर गै पवित्र ।

'हे मैना ! यस निर्दयी जात त स्वास्नीमानिसकै हो । पुरुषको समान वचनको सच्चा अरु कोही हुन सक्तैन । तिमीले पुरुषमा के कस्तो अवगुण देखेर तिम्रो मनमा पुरुष प्रति यस्तो घृणाको भाव उत्पन्न भयो !' यति सुनेपछि अलि नरम भएर मैनाले भनी हे—सुगा ! जुन घटनाले मलाई पुरुषप्रति घृणा उपजायो त्यो म तिमीलाई भन्दछु, मेरो कुरा तिमी ध्यान-पूर्वक सुन—

## पहिलो कथा मैनाको

हे सुगा ! कुनै समय हस्तिनापुर ( दिल्ली ) मा एउटा उत्तम खानदान ( वंश ) को योटा क्षत्रिय बस्तथ्यो । त्यसको नाम बलवीर सिंह थियो । आफ्नू कुनै कामले एकपल्ट त्यो चार-पाँच दिनको लागि त्यहाँबाट केही पर गयो । बाटोमा प्यास लागेर त्यो एउटा गाउँमा पस्यो । त्यस गाउँमा उसले एउटा कुनै तल्लो जात चमारकी छोरी ढोकाको छेउमा उभिएकी देख्यो । त्यो निकै सुन्दरी रूप-यौवनवती, मानो कामदेवकी स्त्री रति जस्तै थिई । त्यसलाई देख्नासाथ आफ्नू चेत हराएर मुर्छा परी भूमिमा ढल्यो । त्यो बलवीर सिंह-

लाई त्यसरी ढलेको देखेर कतिपय मानिसहरू त्यहाँ जम्मा भए र त्यसलाई पानी छर्केर होशमा ल्याए, अनि त्यो बिलौना गर्दै भन्न लाग्यो—

एक बाजी रूप देखाई सबै खोसी लगिन् ।
चित्त साथै प्राण मेरो ती मोहिनीले लगिन् ॥
लाज मेरो काज सारा प्रान और इज्जत् लगिन् ।
देह् यौटा शेष राखी प्राण तानेर लगिन् ॥
नेत्ररूपी बाण हानी घायल तुल्याई ती गइन् ।
सर्वस्व मेरो शक्ति लूटी ती कता भागी गइन् ॥
दयाले हीन रैछन् ती कता भागिन्, कता भागिन् ।
कता जाऊँ कहाँ खोजूँ भयो बेकारै यो जीवन् ॥
गयो धन-मान औ इज्जत् गरौं के व्यर्थको मन्थन् ।
गर् बर्बाद आफैले वृथा पागल भयो यो मन् ॥
सुनाऊँ दुःख कसलाई र बुझ्ने को छ लौ सज्जन् ॥
दयालु एक छन् मेरा उनै श्री नन्दका नन्दन् ॥

यसरी विह्वल भएर यौलाहा झैं कुरा गरेको सुनी त्यहाँ एकत्रित भएका मानिसहरू मध्ये एक जनाले सोधे—

'महाशय, तपाईलाई के भयो ? आफ्नो हालतको विषयमा केही भन्न हुने भए सुनाउनु हवस् । तर उसले सुनेको पनि नसुने झैं गरी दीर्घ निःश्वास छाडेर भन्न लाग्यो—

कती कष्ट दिन्छौ सुध्याई-सुध्याई ।
वियोगी भएको छु आफैं म, भाई ॥
गरौं केहि चर्चा भने कष्ट पाई ।
स्वयं छु, तयारी जली मर्न लाई ॥

छ मर्ने बखत यो भनी जानि जानी।
म धस्छु छुरी प्रेमको क्यै नमानी॥
नजर्को कड़ा बाणको चोट खाई।
रहेछु म ऐले स्वयं छट्पटाई॥
म हेर्दै थिएँ, देख्न पाइन राम्रा।
प्रभू ईश, कैलेह् मिलन हुन्छ हाम्रा।
कहाँ मिल्छ कि देख्न ती प्यारिलाई।
भनी आश मन्मा छ ठूलो मलाई॥

यति भनिसकेर पनि चित्तमा शान्ति नभाई दुवै आँखा-बाट आँसुका धारा बगाई, फेरि भन्न लाग्यो—

सम्झी-सम्झी तिमीलाई कष्ट भोग्दैछु बसरी।
न त्याग निष्ठुरीले हैं जानेछु सहजै मरी॥
बाटो हेर्दैछु हे प्यारी, देऊ आएर दर्शन।
नदेखी रूप तिम्रो त्यो, खुसी हुन्न दुखी मन॥
पोल्छ झन् सम्झँदा बनी, चित्तमा बढ्छ व्यग्रता।
आऊ छिटै तिमी प्यारी, हेर मेरो दशा यता॥
झट्ट आई खुवाउ प्यारी, प्रेमको रसकी अनि।
बाँच्न सक्ने छु, नता सक्छु बौलाहा बनी॥

बलवीर सिंहको त्यस्तो प्रलाप सुनेर छक्क परेका दर्शक-हरूले यो युवक त्यो त्यामे ( मेहतर ) की छोरीलाई देखेर मोहित भएछ भन्ने बुझेपछि तिनीहरू मध्येको थोड़ा अलि बुढो व्यक्तिले सम्झाउँदै भने—ए महाशय ! आफूलाई होशमा राख, तिमी जातका ठाकुर, त्यो त्यामेकी छोरी। तिमीले त्यस्ता नीच जातकी स्त्रीको प्रेममा यसरी बौलाहा अस्तो

हुन सुहाएन । आफ्नो धर्म र आचार विचारको पनि ध्यान राख्नुपर्दछ । किनभने यो सौन्दर्य र यौवन चार दिनको जुनेली रातपछि अन्धकार आए जस्तै हो । यस विषयमा कसैले भनेको पनि छ—

बोल्छ सदा न त कोइली, हुन्छ सदा न त श्रावण ।
सदा न यौवन हुन्छ स्थिर, जस्तै दीप पतंग ॥

यसै निम्ति हामीले भनेको मानेर आफ्नो, चित्त सम्हालेर होशमा आऊ, महाशय ! तिनको बात सुनेर नौ बलवीर सिंह ठाउँको ठटाएर भन्न लागे—

भलाई छ के काम यो धर्म देखि ।
खुसी हुन्छ यो मन् प्रियालाई देखी ॥
जे भन्न इच्छा छ कोही सुनाओ ।
मलाई त पागल सबैले बनाओ ॥
कुनै युक्ति अर्को भए त्यो बताओ ।
उनैको सबैले मिली भेट गराओ ।
कुनै छैन वास्ता पनी धर्म-पापको ।
फगत् एक इच्छा छ भेट्ने प्रियाको ॥

हे सज्जन हो ! मलाई धर्म र आचार अथवा जात-पात-को मतलब छैन । मत केवल ती चन्द्रमुखीको दर्शन चाहन्छु । तिनलाई नपाए प्राण दिन पनि तयार छु । बस कृपा गरेर तिनका माता-पितालाई एउटा आफ्नो थिचिएको युवक तेरी छोरीको नयन-बाणले घायल भएर मर्न तयार छ, कि न

आफ्नी छोरीको विवाह उसैसित गरिदेऊ, नभए तिम्रो नै ढोकामा टाउको ठोकेर मर्दछु भन्दैछ, यति सुनाइदिए ठूलो गुन लाग्नेछ । यति भनेर लामो-लामो सास फेर्दै भन्न लाग्यो—

हाय दैव कस्तो भयो निर्मोहीको संग।
इच्छा छैन बत्तीको, तैपनि मर्छ पतंग ॥

त्यो बलवीर सिंहको त्यस्तो कुरा सुनी तिनै दर्शकहरु मध्ये दुइ जना च्यामेको घर गएर सबै कुरा सुनाइदिए। त्यो कुरा सुनेर बिचारा च्यामे बलवीर सिंहकहाँ आयो र प्रार्थना गर्दै भन्न लाग्यो—महाशय ! कुनै पनि कुरा जाति-नजाति विचार गरेर भन्नुपर्दछ किनकि तिमी जातका क्षत्रिय म च्यामे, अतः मेरी छोरीसित तिम्रो बिवाह कसरी हुन सक्छ ? यदि मैले यसरी विवाह गरिदिए पनि तिमीलाई त्यसमा कुनै सुख आनन्द प्राप्त हुन सक्तैन। किनकि हाम्रो काम नर्क उठाउने र बाटो बढार्ने हो, विवाह गरेपछि तिमीले पनि त्यो काम गर्नु पर्नेछ, अनि तिम्रा जाति-बन्धुले के भन्लान्, यसको पनि विचार गर। यसरी च्यामेले धेरै बुझायो तर बलवीर सिंहको मनमा एउटा कुरा पनि बसेन, सत्य कुरा हो—जसलाई घाउ लागेको छ, त्यसको पीड़ा उसैले जान्दछ। अन्त्यमा च्यामेको केही जोर नचलेर आफ्नी छोरीका विवाह बलवीर सिंहसित निकै धूम-धामले

गरिदियो । अब तो दुबैको स्नेह बढ्दै गयो । बलबीर सिंहलाई त्यो स्वास्नी बाहेक अरू केही पनि मनपर्न छाड्यो । यही क्रमले विषय भोगमा लिप्त भएर दिन बितेको थाहै भएन । एक दिन अकस्मात बलवीर सिंहलाई आफ्नो घरको सम्झना भएर आफ्नी स्वास्नीलाई भन्यो—अब त घर जान मन लागिरहेछ, यदि तिम्रा माता-पितालाई कुनै आपत्ति छैन भने उनीहरूसित भन तिमीलाई मसँग जान बिदा दिउन् । पतिको त्यस्ता कुरा सुनी स्त्रीले भनी—मलाई त कुनै कुराको बाधा छैन किनकि म त तन-मनले तिम्रो दासी भइसकेकी छु । यति भनेर उसले आफ्ना माता-पितालाई सबै कुरा सुनाई । उनले पनि प्रसन्न भएर जो सकेको गहना-लुगा दिई छोरी बिदा गरिदियो । बलवीर सिंह स्वास्नी लिएर घरतिर हिंड्यो । घर पुग्न एक दिनको बाटो रहेपछि उसले मनमनै विचार गर्‍यो—यो मैले गर्न नहुने काम गरें । यही स्वास्नीको प्रेममा जात-भातफालिदिएँ । अब माता-पिताले यो कुरा थाहा पाएर मलाई के भन्लान् । अतः योसित घर जानु भन्दा त यसलाई यहीं इनारमा हाली यहाँबाट घर जानु बेस छ—यस्तो मनमा निश्चय गरेर राती सुतेपछि खुकुरीले हिकाएर इनारमा फाली सारा झिटि-मिटी लिएर घरको बाटो समायो । घर पुगेपछि उसका माता-पिताले सोधे—बाबू ! तिमी यतिका दिन कहाँ थियौ ? हामी त

तिम्रो चिन्तामा दुःखी भइरहेको थियो । बलवीर सिंहले उत्तर दियो—मलाई एउटा धनी महाजनले आफ्नो सेवामा राखेको थियो । केही दिनको बिदा मागेर आएको छु । छोराको कुरा सुनेर आमा-बाबू निकै प्रसन्न भए ।

उता घायल भएर इनारमा फालिएकी श्यामकी छोरी परमेश्वरको कृपाले जलको शीतलता पाएर केही होशमा आई र इनारको सिक्री फेलापारेर त्यहीं समाती ज्यान बचाई । दैवसंयोग एउटा बाटो लागेको पथिक पानी झिक्न भनेर त्यही इनारमा पुगी लोहोटा खसाल्यो । उसले त्यो लोहोटा समाई । अनि पथिकले सोध्यो—तिमी को हौ ? कसरी इनारमा पऱ्यौ ? तब उसले भनी—'हे देवदूत ! म विपत्तिमा पारिएकी यौटी दुःखी छौ हुँ, दया गरेर मलाई यस इनारबाट झिकिदियौ भने ठूलो गुन लाग्नेछ ।' त्यति सुनेर पथिकले झिकिदियो र सोध्यो—तिमी यो अवस्थामा कसरी पुग्यौ ? अनि त्यसले भनी—म आफ्नो लोग्नेसित घर जान लागेकी थिएँ । अकस्मात् चोरहरू आएर भएको सबाति सबै लगे । मलाई घायल पारेर इनारमा फालिदिए, मेरो लोग्नेको के हाल भयो, मलाई थाहा छैन ।' त्यति सुनेपछि त्यो दयालु यात्रीले अनेक कष्ट सहेर पनि त्यसलाई घर पुऱ्याईदियो । त्यसका माता-पिताले छोरीको अवस्था देखेर अनेर प्रकारले सोधे, तर उसले जति कुरा अघि यात्री-

मित भनेको थिईं, त्यति नै भनी, आफ्नू लाग्नेका अपराध लुकाई । त्यसपछि औषधि मूलो गर्दा त्यो चाँडै नै निरोग भई अनि बाबुले भन्यो-जुन ईश्वरले तँलाई बचायो, त्यसैले तेरो लाग्नेसित पनि भेट गराइदिनेछ ।

मैनाले भनी—हे सुगा ! यताको कथा यहीं रोकेर अब त्यो बेइमानको कुरा भन्दछु, सुन । जब बलवीरसिंह घर पुग्यो तब सबै खुसी भए । दुई-चार महीना त सारा सामान बेचेर खाँदा-पिउँदा आनन्दले बित्यो । अनि पैसा सकियो र उसले विचार गर्‍यो—अब ससुराली जान्छु र तिम्री छोराले छोरो पाएको छ भन्दछु, अनि जे जति दिन्छ, लिएर आउँछु, त्यसैले फेरि केहि दिन सुखले बित्नेछ । यति विचार गरेर ससुराली गयो । त्यहाँ पुगेपछि आफ्नी स्त्रीलाई इनारमा पानी लिन आएको देख्यो, दुबैका आँखा जुधे, बलवीर सिंहको सातो गयो, डरले जिउ काम्न लाग्यो—हे ईश्वर ! म यहाँ किन आएछु, अब यो त्यसैले मलाई नमारी छाड्दैन यस्तो विचार गर्दै थियो ; त्यतिकैमा त्यसकी स्त्रीले त्यसको हालत देखेर भनी—हे बेइमान पुरुष ! म तिमी जस्तै बेइमान होइन । मैले तिम्रो काम अहिलेसम्म आमा बाबुलाई भनेकी छैन, नराम्रो तिमीले डराउनु पर्दैन, मित्र आऊ भनेर घरमा लगी । अनि बलवीरले भन्यो—म साह्रै लज्जित छु । जे भयो त्यसको निम्ति क्षमा गर । अनि त्यसका सासू-ससुरले देखेर

अंकमाल गरी—त्यस ईश्वरलाई अनेक धन्यवाद छ जसले मेरा ज्वाईलाई यहाँ ल्याइदियो, इत्यादि कुरा गरेर निकै सम्मानको साथ खान पिन गराई राखे। केहि दिन ऐस आराममा बितेपछि बलबीर हिहले एक दिन भन्यो—प्रिये ! अब आफ्नु घर जानुपर्दछ। उसले भनी—मलाई तिमीसित जानमा कुनै आपत्ति छैन तर पहिलेकै जस्तो गर्छौं कि भनेर डर लाग्दछ। अनि बलबीरले भन्यो तिम्रो र मेरो बीचमा ईश्वर साक्षी छ म अब कुनै गलती गर्नेछैन।

त्यसपछि आमा-बाबुसित बिदा मागेर जान तयार भएपछि च्यामेले पनि जो सकेको गहना पैसा दिएर बिदा गरिदियो। त्यहाँबाट हिंडेपछि बाटो डरलाग्दो जंगलमा पहिले गरेजस्तै निदाएकी स्त्रीलाई घायल पारी जो भएको सामान लिएर बाटो ततायो। त्यो घायल भएकी बिचरी त्यहीं छटपटाइरहेकी थिइ, दैवसंयोगले उसैका गाउँमा बस्ने बाटो च्यामे आयो र उसले देखेर सोध्यो—तिम्रो यस्तो हालत कसरी भयो ? उसले सबै कुरा सत्य बताइदिई। त्यसका कुरा सुनेर पहिले त उसले बहुतै दुःख मान्यो र उसलाई धैर्य दिएर उसका आमा बाबुकहाँ पुर्याइदियो। त्यसपछि त्यो च्यामेकी छोरीले त्यो बेइमानको सम्झना त के नामसम्म पनि लिइन। हे सुगा ! मैले यो कथा सुनेदेखि मलाई कुनै पनि पुरुषमा बिश्वास लाग्न छाड्यो। अतः अब म आफू-

लाई पुरुष मात्रसित बचाइरहेकी छु । मैनाका यस्ता कुरा सुनी सुगाले भन्यो--मैना ! तिमीले भनेको पनि सत्य होला तर संसारमा सबै पुरुष वा सबै स्त्री समान हुँदैनन्--

औंला हुन्नन् कवै कसैका समान ।
भिन्ना-भिन्नै बुद्धि त्यस्तै छ जान ॥
खारा हुन्नन् एक नासे जवान ।
नारी त्यस्तै हुन्, तिमी बात मान ॥

सबै नारी असल हुन्छन्, पुरुष मात्र बेइमान हुन्छन् भन्ने तिम्रो धारणा भए म यस विषयमा तिमीलाई यौटा कथा भन्दछु, ध्यान दिएर सुन, अनि चित्त बुनेछ ।

--:०:--

## दोस्रो कथा सुगाको

हे मैना ! निकै पहिले यौटा रत्नपुर नामको शहर थियो । । त्यहाँ सबै गुणले सम्पन्न रत्नसेन नामका राजा राज्य गर्दथे । तिनका चार छोरामध्ये सबैभन्दा जेठा मदन-सेन अरू भाइहरू भन्दा वीर, पराक्रमी र सर्वगुणसम्पन्न थिए । एक दिन कुनै अपराधमा तिनलाई पिताले दुई वर्षको लागि देश-निकाला गरिदिए । राजाको त्यस्तो कठोर आज्ञा

सुनेर मनमा चिन्ता गर्दै सरासर आफ्नो महलमा गए। त्यहाँ तिनकी पत्नी मालती ओ आफ्नो रूप-यौबनको अगाडि अरूलाई तुच्छ ठान्दथिन्-शृङ्गार गरेर पतिको बाटो हेरिरहेकी थिइन्। चिन्तामा गाडिएका मदनसेनलाई देख्नासाथ छक्क परेर सोधिन्—'स्वामी! सधैं प्रसन्न रहने हजुरलाई आज के भयो र चिन्तित हुनुभयो? फूल जस्तो फक्रेको अनुहार किन ग्रहण लागे जस्तो देखियो?' आफ्नी प्रियतमाको त्यस्तो कुरा सुनेर मदनसेनले भने—'हे प्रिये! के भनौं, भन्ने जस्तो त केही कुरै छैन, तर नभनी पनि भएन। मेरो पिताजीले आज मलाई दुइ वर्षको लागि देश त्यागी जाने आज्ञा दिनुभयो, यसैले म तिमीसित बिदा हुन भनी आएको।' पतिको यस्तो कुरा सुन्नासाथ मालतीको चेत हरायो र मूर्छा परिन्। तिनको स्थिति देखेर मदनसेनले मनमा विचार गरे—हरे! मैले यो जाती गरिन, इनलाई यो कुरा नभन्नु पर्ने रहेछ, अब त जे हुने भइहाल्यो।

उता दासीहरूले मालतीको तत्काल उपचार गरेर चेतमा ल्याएपछि उनी भन्दछिन्—'हे नाथ! हजुर मलाई छाडेर परदेश जान्नु हुन्छ हजूर विना मेरो यो पापी प्राण कसरी मेरो देहमा रहिरहला? अतः म पनि साथै जान्छु।' यति सुनेर मदनसेनले भने—'हे प्रिये! पिताले तिमीलाई देशनिकाला गरेको होइन, अतः तिमीले जानु

पर्दैन । म समय पुग्नासाथ आइपुग्नेछु । फेरि परदेशमा अनेक थरिका कष्ट पर्दछन्, तिमी घरमा सुखले बसेकी, परदेशका दुःख सहन सक्नेछैनौ ।' यति सुनेर मालतीले भनिन्—स्वामी ! मलाई हजुरसँग रहँदा जति कष्ट परे पनि खुसीनै लाग्नेछ र सहनेछु । हजुर नभएपछि यो महल, यी सुखका साधन मलाई परदेशभन्दा पनि बर्ता दुखदायी हुनेछन् । अतः म हजुरसित अवश्य जान्छु । पत्नीका कुरा सुनी मदनसेनले विचार गरे मैले छाडेर गएँ भने इनले अवश्य प्राण त्यागनेछन् । बरू साथैं लैजान उचित छ भनी 'प्रिये ! तिमी फिक्र नमान, म तिमीलाई साथैं लैजान्छु, हिंड' यति भनेपछि मालती प्रसन्न भइन् र खान-पिन गरी आराम गरे !

भोलिपल्ट विहान हुनासाथ दुबै जना आफ्ना शहरबाट अज्ञात स्थानको निम्ति हिंडे । निकै पर पुगेपछि थकाई लाग्यो र लौटा ठूलो वृक्षमनि विश्राम गर्न बसे । बर्ता थकाइले चुर भएकै थिए, बतास लाग्नासाथ दुबैं झुसुक्क निदाए । दैवसंयोग कतैबाट यौटा सर्प आएर मालतीको खुट्टामा टोकिदियो । तिनको शब्द सुनेर मदनसेन उठे । मालतीको हालत र सर्पलाई भाग्न लागेको देखेर ती पनि अकमक्क परे । त्यसपछि सर्पको विष फैलिंदै गएर एकै छिनमा मालती-ले प्राण त्यागिन् । आफ्नी रानीको मरण देखेर मदनसेन

अत्यन्त व्याकुल भई उच्च स्वरले रुन र विलाप गर्नलागिं। तिनले रोएको सुनेर त्यस जङ्गलका जीव-जन्तु पनि व्याकुल भए। मदनसेनलाई प्रियतमा विना संसारै शून्य भए झैं लाग्यो। अन्त्यमा रानीसितै म पनि डढेर मर्दछु भन्ने निश्चय गरी जंगलमा दाउरा बटुल्न लागे। दैवसंयोग त्यसै वखत शिव-पार्वती डुल्दै त्यही जंगलमा आइपुगे र मदनसेनले रोएको शब्द सुनी पार्वतीको मनमा दया लाग्यो र भनिन्—'हे नाथ! यो जंगलमा रोएको सुनेर मलाई अत्यन्त दया लागेर आयो। अब यसको विपत्ति टारिदनुहवस्।' शिवजीले भन्नुभयो—'तिम्रो यही बानी हुनाले म साथमा ल्याउन्न। यस संसारमा अनेक थरिका दुःखी मनुष्यहरू छन्, म कस-कसको दुःख विपत्ति निवारण गरेर हिँडिरहन सक्छु, हिंड जाऊँ।' पार्वतीले क्यै गर्दा पनि मानिनन् र शिवजी मदनसेनको नजीक गएर सोध्नुभयो—'तिमी किन रोएका, तिमीलाई के विपत्ति आइपर्‍यो!''

मदनसेनले भने—'प्रभो! मेरो कष्ट के साधिवाध्किसन्छ, म सारा वर्णन गर्न पनि असमर्थ छु। मेरो निमित्त त पृथ्वी चिरिए पनि म उसैमा पसेर प्राण त्यागि दिन्थे। तिनका कुरा सुनेर शिवजीलाई पनि दया लाग्यो र भन्नुभयो—'महाशय! तिमी कष्टको सबै हाल मलाई सुनाऊ।' अनि मदनसेनले पिता द्वारा देशनिकाला गरेदेखि रानीको

मरणसमयमको सबै कुरा सुनाई भने—प्रभो ! यिनको वियोग म सहन सक्तिन त्यसैले इनैसित जलेर मर्दछु भनी दाउरा बटुल्न लागिरहेछु । तिनको कुरा सुनेर शिवजीले सम्झाउनु भयो—'राजपुत्र ! तिमी त बुद्धिमान भएर पनि मूर्ख जस्तै कुरा गर्दछौ । विचार गर—यो संसारमा मर्नु र जन्मनु त लागिरहेछ । यहाँ आइपछि एक दिन अवश्य जानु पर्दछ-न कोही कसैसित आयो, न कोही कसैसित जान्छ—यो कुरा पनि तिमीलाई ज्ञात छ । बुद्धिमान भएर पनि यस्तो कुरा किन गरेको ! तिमी बाँचिरहे यस्ता स्त्री जति पनि ल्याउन सक्छौ । यस कारण मेरो कुरा मानेर यो हठ र शोक छाडि-देउ ।' शिवजीको यस्तो शिक्षा सुनेर मदनसनले विन्ती गरे—हे महाराज ! हजुरले आज्ञा भएको सबै कुरा ठीक हो, तर यस्तो स्त्री म अर्को पाउन सक्तिन र म यसको वियोग सहन गर्न पनि समर्थ छैन ; अतः म यसैसित जलेर मर्न तयार छु ।'

मदनसेनको कुरा सुनेर शिवजीले जान्नुभयो कि यो यस स्त्रीलाई पाउन नसकेर मर अवश्य मर्दछ—अतः भन्नु-भयो—सुन, राजकुमार ! अब तिम्रो रानीको उमेर २० वर्ष मात्र थियो, सो सकियो उनी मरिन् । तिम्रो उमेर साठी वर्ष छ त्यसबाट तिमीले पनि बीस वर्ष भोगिसक्यौ, अब शेष चालीस वर्षमध्ये आफ्नो बीस वर्ष रानीलाई संकल्प

गरेर देऊ, अनि तिमी दुवैको उमेर बराबर हुन्छ। यदि यो कुरा तिमीलाई स्वीकार भए तिम्री रानी अहिले नै उठ्नेछन्। शिवजीको यस्ता कुरा सुनेर मदनसेनले स्वीकार गरेपछि शिवजीले हातमा जल दिएर संकल्प गरि दिएर मालतीको हातमा राखिदिनु भन्दा अगाडि शिवजीले भन्नु भयो—'जुन बेला तिमी रानीलाई दिएको उमेर संकल्प गरेर फिर्ता लिनेछौ, उसैबेला इनी मर्नेछन्। तर रानीलाई यो कुरा कदापि नसुनाए, किन भने यो कुरा कुनै बेला तिम्रो प्राण बचाउन सहायक हुनेछ।' यति भनेर शिव-पार्वती अन्तर्धान भए, अनि मालती पनि 'राम-राम' भन्दै उठिन् र आफ्ना पतिसित भनिन्—'स्वामी ! म त आज बेसरि निदाइछु, हजुरले पनि उठाइदिनु भएन।' मदनसेनले भने—तिमीलाई थकाई लागेर मस्त निदाएकी देखी नउठाएको हो, अरू केही कारण छैन।

त्यसपछि दुवै जना त्यहाँबाट हिंडे। केही दिनपछि योटा रमणीक स्थान देखेर त्यहीं बसे। त्यहाँ योटा महन्तको मठ रहेछ। तिनीहरू त्यस मठमा पुगेपछि योटा भर्खरको जवान महन्त फूल-माला लगाई सिंगारिएर राम्रो गद्दीमा पल्टिई आराम गर्नलागेको देखे। दुवै जना भोक-प्यासले थाकेका हुनाले उहीं बसे। एकछिनमा मदनसेनले रानीसित भने—'मलाई असाध्य पानीको तिर्खा लाग्यो, म पानी पिएर

आउँछु । तिमी पनि पानी पिउने भए ल्याइदिन्छु ।' उनले भनिन् मलाई—अहिले अहिले प्यास लागेको छैन ।' अनि मदनसेन डोरी र बाल्टी लिएर इनारमा पानी ल्याउन गए । यता महन्तको र मालतीको आँखा चार भए । अनि मालतीको चित्त चञ्चल भएर भनिन्—'महन्तजी ! हजुर त यहाँ बड़ो ऐश आरामले रहनु भएको रहेछ ।' महन्त पनि कम थिएनन्; उसले भन्यो—'तिमी पनि यहीं बसेर यस्तै ऐश गरन ।' अनि मालतीले भनिन्—'महन्तजी ! हजुरसित बस्ने मन त मेरो पनि छ तर मेरा पति मेरो साथमा छन्, अतः म कसरी हजुरसित बस्न सक्छु ?' महन्तले भन्यो—'यसलाई कुनै युक्तिले इनारमा खसालेर आऊ, त्यो त्यहीं मर्नेछ, अनि हामी खूब आनन्द गरौंला ।'

एत्तिकैमा मदनसेन पनि पानी लिएर आइपुगे । अनि रानीले भनिन्—मलाई पनि तिर्खा लाग्यो जल पिउन दिनोस् । उनले भने—प्रिये ! मैले त तिमीसित अघिनै सोधेको थिएँ, तिमीले इच्छा गरिनौ । अब तिर्खा लागेको भए म अहिल्यै गएर पानी ल्याइदिन्छु ।' यति भनी मदनसेन पानी लिन हिंडे, मालती 'म पनि जान्छु' भन्दै साथमा गइन् । बिचरा मदनसेन त त्यसको नक्ली स्नेहमा पागल भएको थियो । उसलाई के थाहा—यो मेरो प्राण लिन साथमा जाँदैछ । हुन पनि स्त्रीको चरित्र र पुरुषको भाग्य देवताले त जान्न

सक्तैनन् भन्ने मनुष्यको के कुरा ? यसै विषयमा कुनै जान्ने व्यक्तिले भनेका छन्—

स्त्रिया चरित्रं पुरुषस्य भाग्यं
दैवो नजानाति कुतो मनुष्यः।

सुगाले भन्यो—हे मैना ! मदनसेन इनारमा गएर जब पानी झिक्न लागे सब रानीले अपरझटमा धुचेटेर इनारमा लडाइदिई र आफू महन्तनेर आइपुगी। अनि त्यो महन्त मालतीलाई लिएर, अब यहाँ बस्नु हुँदैन भन्ने निश्चय गरेर त्यहाँबाट भिड्यो। त्यसपछि यौटा कुनै शहरमा गएर बस्न लागे। त्यसै बसेर त भएन, केही गर्नु आवश्यक थियो। अतः महन्तले केही दिनमै मालतीलाई नाच-गानामा निपुण तुल्यायो। उसले त्यही गुणद्वारा बेसरी पैसा कमाई र दुवै जना ऐश-आराम गरेर रहन लागे।

सुगाले भन्यो—मैना ! मालती त महन्तसित खुब आनन्द भोग्न लागिन्। उता मदनसेनको विषयमा सुन—इनारमा परेको मदनसेन एक छिन त आत्तियो तर यौटा फलामे सिक्री फेला परेर त्यसैलाई समाई ईश्वरको सम्झना गर्नलाग्यो। संयोगले यौटा घुमन्ते व्यापारीको लश्कर त्यहीं आइपुग्यो र तीमध्ये यौटा व्यक्ति पानी झिक्न गयो। त्यसले खसालेको भाँडो मदनसेनले समाए, अनि ऊ कराायो—'यो इनारभित्र तिमी को हौ ?' मदनसेनले भने—'म यौटा

विपत्तिमा परेको मानिस हुँ, मलाई इनारबाट बाहिर झिकिदेऊ, ठूलो उपकार मान्नेछु।' त्यसलाई दया लाग्यो र मदनसेनलाई इनारबाट झिकिदियो र आफ्नू मालिकको अगाडि लग्यो। अनि मालिकले सोध्यो—'तिमी को हौ? कसरी इनारमा पर्‍यौ?' मदनसेनले भने—म आफ्नु विपत्तिको कुरा भन्न लाज मान्दैछु, फेरि नभनी पनि मन मान्दैन हजुरको मानिसले मेरो प्राण रक्षा गरेको हुनाले म भन्दछु। यति भनी आफ्नू घरबाट हिंडेदेखिको सारा हाल वर्णन गरेर सुनाए। मदनसेनको कुरा सुनेर त्यस व्यापारीको मनमा दया आयो र भन्यो—'तिमी कुनै कुराको चिन्ता नगर। मेरो लश्करका साथै हिंड। पछि जहाँ जान इच्छा लाग्ला उहीं जानु। मदनसेन पनि कुनै उपाय नदेखि तिनीहरूकै साथमा हिंडे।

केही दिनमा मालती र महन्त बसेकै नगरमा त्यो लश्कर आइपुग्यो र मदनसेनलाई त्यो शहर राम्रो लागेर त्यो व्यापारीसित भने—मलाई यहाँ केही दिन बस्न मन लाग्यो, यदि तपाईंको इच्छा भए म केही दिन यहीं बस्तछु। व्यापारीले भन्यो—'तिमी बसे, मलाई केही पनि आपत्ति छैन।' त्यसपछि मदनसेन व्यापारीसित बिदा भएर शहरमा आए अनि पैसा कमाउने उपायमा शहर डुल्न लागे। केही दिनपछि यौटा ठूलो महाजनकहाँ नोकरी गर्न लागे। आफ्नू

चातुर्यले महाजनलाई सन्तुष्ट पारेका हुनाले उसको विश्वास-पात्र सहायक भई सुखपूर्वक बिताउन लागे ।

एक दिन त्यसै शहरका राजाको दरबारमा मालतीको नाच हुने भयो र राजाले शहरका सबै सेठ साहूकारहरूलाई नाच हेर्न आमन्त्रण गरे। मदनसेनले पनि नाच-गानको प्रसंशा सुनिराखेका हुनाले जाने मन गरे र आफ्ना मालिक सँग गई एक ठाउँमा बसेर नाच हेर्न लागे। त्यस महफिलमा सबै जना आइसकेपछि राजा पनि आए, अनि मालती स्वर्गकी अप्सरालाई पनि 'पर सर' भन्ने श्रृङ्गार गरी सभामा आइन्। राजाको आज्ञा पाइकन मालतीले आफ्नो कलाको प्रदर्शन गर्दै हाउ-भाउ, लय-ताल मिलाई गाना गाएर सबै दर्शकलाई मुग्ध पारिन्—

सिर्दथी श्यामले फोरिदिए खल्ले कसमा धरि जाल घड़ा।
देखेँछन् अहा कम्मरमा दुइ हात धरी, अइ सासु खड़ा॥
जाउँ जहाँ लि पनी उहिं नै पुकार्न् गर्न भनी रगड़ा।
देख्ई मोहनको लबसा तर साँझिम गर्न कुनै झगड़ा॥
जळ भर्न भनी घरबाट हिँडे अनि बोल्दो काग खुसी रुखमा।
सम्झेँ रूप सुने मनमोहनको, घोक्यो धीर बढ़ी मनमा।
अब ता न यता न उता म सकुँ तर नीर भरेँ यमुना नदिमा।
फोरिदिए पुगि श्याम घड़ा, सखि, यो म भनौँ कसका सँगमा॥

यस्तै अनेक थरिका कामोद्दीपन गर्ने राग-रागिनीहरू मालतीले गाइन्, सारा सभा प्रसन्न भयो र सबैले प्रसंशा

गर्दै धेरै द्रव्य इनाममा दिए। त्यसै मौकामा मदनसेनले पनि आफ्नू, रत्न-जडित औंठी फुकालेर मालतीलाई इनाम दिए। त्यो औंठी देख्नासाथ मालतीले चिनिन् र मनमनै विचार गरिन् ओहो ! यो त गजब भयो ! यो दुष्ट त बाँचेर यहाँ पनि आइपुग्यो। यसले मलाई अवश्य चिन्यो होला, अब मलाई जीवित छाड्दैन। अतः यसलाई मार्ने उपाय गर्न पर्‍यो—अरु त कुनै उपाय छैन, अब कुनै उत्तम रागिनी गाएर राजा-लाई प्रसन्न पारी यसलाई मार्ने आज्ञा लिन सक्छु—यस्तो निश्चय गरेर खूब राम्रो लय ताल मिलाई एक गीत गाउन लागिन्—

वसन्त-हे कोइली ! किन बोल्छस् तँ बार-बार।
मेरो हृदय पार्छस् किन वार-पार॥
मदनले गर्छ घरी-घरी मनमा जोर।
त्यै माथि किन गर्छस् तँ शोर-शोर॥
सारा रात बित्छ संझनाले अघोर।
बग्दछ नयन नीर सक्दैन अहि चित्तचोर॥
कसरी संचित राखूँ म यो यौवन-भार।
कलेजा मेरो हुँदैछ मदन बाणले तार-तार॥

यस्तो कामोद्दीपक ऋतुराजको गुण-गान सुनेर राजा बहुतै प्रसन्न भए र मालतीसित भने—सुन्दरी ! तिम्रो गान-तान सुनेर म खुसी भएँ। अतः अहिले तिमीले जे माँग पनि म दिनेछु, फरक पर्दैन, माग। उत्तम मौका देखेर

मालतीले भनिन्—'महाराज ! यदि हजुर प्रसन्न हुनुहुन्छ भने वचन दिनुहवस्, अनि म माग्नेछु ।' यति सुनेर राजाले बाचा-बन्धन भयो भनेपछि मालतीले भनिन्—हे महाराज ! अरु मलाई केही चाहिन्त । केवल हजुरको यही सभामा मेरो मोटा चोर छ, त्यसलाई अहिल्यै मार्ने आज्ञा बक्सियोस् ।' मालतीका यस्ता कुरा सुनी राजाले भने—'तिमी आफ्नू चोरलाई मेरो अगाडि उपस्थित पार ।' यति सुन्नासाथ मालतीले मदनसेनको हात समाई राजाको सामुन्ने ल्याइ दिइन् । अनि राजाले सोध-पूछ केही पनि नगरी यसलाई वध-स्थानमा लगेर काटिदिनू भन्ने पोटेहरूलाई आज्ञा दिए ।

मदनसेनको मालिक यो सबैकुरा हेरिरहेको थियो, उसले आएर सोध्यो—'मदनसेन ! तिमीले यश वेश्याको के अपराध गरेका थियौ र यो तिम्रो प्राण लिन तयार भई ?' मदनसेनले भने-मैले यस वेश्याको केही अपराध गरेको छैन, म निरपराध मारिन लागें । यदि मेरो राजासित दुई कुरा हुन पाए, अवश्य मेरो प्राण-रक्षा हुने थियो । यति सुनेपछि त्यहाँ उपस्थित सबै साहु महाजनहरूले सल्लाह गरी बिन्ती गरे—सरकार ! मेरो कारिन्दा यस वेश्याको हुकुमले निर्दोष भए पनि मारिन लाग्यो । उसको भनाई छ—राजासित दुई कुरा गर्न पाए प्राण बाँच्ने थियो । फेरि मलाई राजाको आज्ञाले मनमा कुनै आपत्ति छैन, तर मेरो दुई कुरा राजाले सुनिदिनु पर्दछ ।

यदि हजुर हाम्रो फरियादमा विचार गर्नुहुन्न भने हामी सबै व्यापारी महाजनहरू यो देश त्यागेर अन्तै जान तयार छौं ! तब राजाले भने—'त्यसलाई मेरो सामुन्ने ल्याओ, त्यसका कुरा सुन्न म तयार छू।' महाजन गएर तत्काल मदनसेनलाई माथमा लिएर आए र राजाको सामुन्ने उभ्याए। अनि राजाले सोधे—तिमीलाई यो अपराधको विषयमा जे भन्नु छ, भन। तब मदनसेनले भने—'सरकार! मैले हजुरको के अपराध गरें र मलाई मार्ने आज्ञा बक्सियो।' राजाले भने—'तिमी यो वेश्याको चोर हौ।' मदनसेनले भने—राजन्! म यस वेश्याको चोर होइन, यो मेरी विवाहिता पत्नी हो, तर मलाई इनारमा धुचेटेर यस महन्तसित भागेर आएकी हो। मदनसेनले यति भनेका सुनासाथ मालती उतर्सिएर बोली—'सरकार! यो भँडुवा को हो, म केही जान्दिन।' केवल मेरो चोर हो।' अनि मदनसेनले भने—'सरकार! यो मेरी स्त्री होइन भने बाटोमा मैले यसलाई जे वस्तु संकल्प गरेर दिएको छ, त्यो मेरो फिर्ता दिने संकल्प गरोस्। मालतीले स्वीकार गरेपछि मदनसेनले भने—मालती! हातमा पानी लेऊ। तिम्रो र मेरो यहीं सभामा दूधको दूध र पानीको पानी निर्णय हुनेछ। अनि मालती हातमा जल लिएर मैले बाटोमा लिएको यसको जे वस्तु हो, त्यो फिर्ता दिएँ भनेर जल छोड्नासाथ उसको

प्राण गयो र मुर्दा बनेर ढली । सारा सभासद छक्क परे । अनि राजाले सोधे—'यो के आश्चर्य भयो, परदेशी ! यसको यथार्थ हाल भलाई सुनाऊ ।' अनि मदनसेनले घरबाट हिंडे-देखिको सम्पूर्ण कथा राजालाई सुनाए । प्रसन्न भएका राजाले मदनसेनलाई अंकमाल गरी, महलमै राखेर आफ्नी छोरीसित विवाह गरिदिए । मदनलाई फाँसी भयो । हे मैना, आफ्ना बुढा-पाकाबाट यो कथा मैले जुन दिन सुनें, त्यही दिनदेखि स्त्रीमात्र सित घृणा गर्न थालें । यसै कारण मैले आजसम्म विवाह पनि गरेको छैन ।

यति कथा सुनेर मैनाले भनी—हे सुगा ! तिमीले भनेको सबै कुरा सत्य होला, तर स्त्री जाति कुनै समयमा यौटा निर्दयी निस्कली तर मर्दको जातमा त समयमा यौटा असल निस्क्यो भने भाग्यको कुरा हुनेछ । तिमी मेरो कुरा पत्याउनौ भने म यौटा कथा भन्दछु, ध्यान दिएर सुन अनि थाहा हुनेछ ।

## तेस्रो कथा मैनाको

हे सुगा ! यौटा लक्ष्मीपुर नामको नगर थियो । त्यहाँ शूरसेन नामका राजा राज्य गर्दथे । तिनको यौटा मदनपाल नामको अत्यन्त राम्रो र बाठो छोरो थियो । एक दिन कुनै अपराधमा राजाले त्यसलाई देश-त्याग गर्ने दण्ड दिए

अनि मदनपाल आफ्नू महलमा आएर केही बाटो खर्च र चारओटा लाल लिएर, जंगलको बाटो समाई हिंड्यो। निकै पर पुगेपछि यौटा साधुको आश्रममा पुग्यो र उनलाई प्रणाम गरेर त्यहीं बस्यो। अनि साधुले सोध्यो—'तिमी को हौ? यहाँ के काम परेर आयौ? उनले भने—म राजा शूरसेनको छोरो हूँ। मलाई पिताले देश-त्याग गर्ने दण्ड दिएका हुनाले म परदेश जान हिंडेको। यहाँ आइपुगेपछि हजुरको दर्शन गरेर जाऊँ भनी आएको।' साधुले भन्यो—'बाबू! परदेश जाँदैछौ त म तिमीलाई चार कुराको अर्ति दिन्छु, त्यसले परदेशमा तिम्रो रक्षा गर्नेछ। मदनपाल सोधे—'त्यो चार कुरा के हो, भन्नुहवस् महाराज!' अनि साधुले भन्यो—पहिलो कुरा, परदेशमा एकभन्दा दुई असल। अर्को कुरा कसैले दिएको खाने कुरा नखानु। खाए पनि अलिकति कुनै पशुलाई खुवाएर त्यसको परिणाम हेरेर मात्र खानु। तेस्रो कुरा, कसैले बिछाइदिएको बिछौनामा नसुत्नु र चौथो कुरा—कहीं कुनै विपत्तिमा परियो भने सकेसम्म नम्र भएर अनेक थरिका कुरा वा कथा भनेर आफ्नो स्वार्थ पूरा गर्नु। मेरो यी चार कुरा कहिल्यै पनि नबिर्से, बराबर सम्झिराखे।

साधुका ती चार अर्ति सुनेर मदनपाल त्यहाँबाट बिदा भई हिंडे। जाँदा-जाँदा यौटा घनघोर जंगलमा पुगे। उहाँ यौटा चीलले कछुआको बच्चालाई लिएर उड्न लागेको

देखे, तर दैव संयोगले त्यो बच्चा चीलको पंजाबाट फुत्कँर भँमा खसी छटपटाउन थाल्यो ! त्यो देखेर मदनपालले सोचे—–यसको रक्षा गर्दछु, यसले दुइ कुराको लाभ छ, यौटा त यसको जीवन-रक्षा हुन्छ, अर्को हामी एकबाट दुई हुन्छौं ! यति विचार गरेर अगाडि हिंडे । जाँदा-जाँदा यौटा अर्को जंगलमा पुगे । त्यस बखत दिनको मध्याह्न भएको थियो ! यो समय यहीं बिताउनु पर्‍यो भन्ने विचार गरी पीपलको ठूलो बृक्षमनि बसे । इनारबाट पानी ल्याई जो भएको खाई त्यो कछुआको बच्चालाई पनि खाइदिई त्यसलाई भने-

'हेर, तँ यहाँ जागै रहेस्, म एकछिन यहीं सुत्तछु । बच्चाले भन्यो—–'हुन्छ, तपाईं आराम गर्नुहस्, म जागै रहन्छु ।' मदनपाल निदाए, त्यो बच्चा जाले बस्यो । त्यस बृक्षमा यौटा काग र सर्प बस्तथे । त्यहाँ कोही परदेशी आएर निदायो भने सर्पले टोकिदिने र कागले आँखाझिक्ने गर्दथे । मदनपाल निदाएपछि सर्प रुखबाट आलियो र तिनलाई टोकिदियो । मदनपाल मुर्दा भए । तिनको स्थिति देखेर कछुआको बच्चा आत्तियो र मनमनै विचार गर्‍यो—–अब म के गरूं ! कसरी आफ्नू घरसम्म पुग्ने भनी रुन लाग्यो । त्यसैबेला काग आएर मदनपालको टाउकोमा बसी तिनको आँखा निकाल्न मात्र आँटेको थियो, कछुआको बच्चाले झम्टेर

कागको नंग्रा मुखले पक्रियो। त्यसले पक्रनासाथ कागले कराएर भन्यो—'हे मित्र सर्प ! झट्ट आउनास्, नभए आज मेरो प्राण रहन्न।' त्यो शब्द सुन्नासाथ सर्प दगुरेर आइ-पुग्यो र आफ्नू मित्रको स्थिति देखेर आठ-दस पल्ट त्यो कछुआको बच्चालाई टोक्यो, तर उसले आफ्नो मुख पटकै पिल्ले मित्र लुकाएको हुनाले सर्पको वश चलेन र उसित भन्यो—'तँ मेरो मित्रलाई छाडिदे।' कछुआले भन्यो—'म यो दुष्टलाई नमारि छाडदिन किनकि तैंले मेरा मित्रलाई मारेका हुनाले म तेरो मित्रलाई मारेर खान्छु।' सर्पले भन्यो—'मेरो मित्र कागलाई जसरी भए पनि छाडिदे।' तब कछुआले भन्या—'तँ मेरा मित्रलाई बचाइदिन्छस् भने म तेरा मित्र-लाई छाडिदिन तयार छु।' त्यसका कुरा सुनी सर्पको चित्त बुझ्यो र आफूले टोकेको स्थानमा मुख लगाइ सारा विष तानिदियो अनि कछुआले पनि कागलाई छाडिदियो। बहीरो निद्राबाट उठे झैं मदनपाल पनि उठेर कछुआलाई भने—'आज त म निकैबेर सुतेछु।' यति सुनेपछि कछुआले सबै बेलिविस्तार सुनायो र मदनपाल त्यो कुरा सुनेर मन-मनै भन्न लाग्यो—त्यस योगीको अति काम लाग्यो। यदि आज म एक्लै भए अवश्य मर्ने थिएँ। यति विचार गरेर त्यहाँबाट अगाडि हिंडे। केही दिनपछि समुद्र किनारमा

पुगे र कछुआले भन्यो—'हे मित्र ! मेरो बस्ने स्थान आइ-पुग्यो । तपाईंले खुसीसाथ बिदा दिए मेरो वियोगमा दुःखी भएका आफ्ना माता-पिताको दर्शन गर्न पाउने थिएँ ।' कछु-आको नम्र कुरा सुनेर मदनपालले 'हुन्छ मित्र ! जाऊ ।' भनी बिदा दिएर अगाडि हिंडे । साँझ पर्न लागेपछि योटा जंगलमा गए र आनन्दपूर्वक विश्राम गर्नलागे ।

दैवसंयोग त्यही वनमा योटा ठग बस्तथ्यो, त्यसका चार छोरा र दुइटी छोरी थिए । जेठी छोरीले अनेक विद्या जानेकी हुनाले आफ्ना दाजूहरू, र पितासित भनी—'मलाई यस्तो ज्ञान भइरहेको छ कि यस वनमा कुनै योटा यात्री आएको छ र त्यो सँग चार ओटा लाल ( रत्न ) छन्, तर त्यसलाई नमारी जीवित समाई ल्याओ, अनि लाल प्राप्त हुन सक्तछ ।' त्यसका कुरा सुनेर ती पिता र चार भाई जंगलतिर हिंडे र चारैतिर खोजिरहेकै बेला योटा युवक-लाई ठूलो वृक्षमनि निदाएको देखे । ती ठगले मदनपाललाई पक्रेर ल्याई त्यो विज्ञ ( जान्ने ) बाठी छोरीको जिम्मा लगाइ-दिएर भने—'यसलाई समाएर ल्याउने काम हामीले पूरा गरिदियौं, अब योसंग रत्न लिने काम तेरो ।' तिनका कुरा सुनेर ठगकी छोरीले भनी—'हुन्छ, अब म जसरी भए पनि योसित लाल फुस्काउँछु ।' ठीक त्यसै बेला ठगकी कान्छी

छोरीले मदनपाललाई देखी र पहिल्यै नजरमा मोहित भ
तर जादू र पिताको डरले केही बोल्न सकिन यस्तै कु
गर्दागर्दै रात पर्‍यो, अनि ठगकी जेठी छोरी खानेकुरा पका
एर तयार पारी, त्यस खाने कुरामा विष हालेकी थिई
थालमा सबै वस्तु पस्केर ल्याई मदनपाललाई भनी—'
पाहुना! लौ, भोजन गर्नुहोस्!' यति सुनेपछि ऊ खा
गर्से अनि साधूको दोस्रो कुरा सम्झेर त्यस भोजन
सामग्रीबाट अलिकति झिकेर कुकुरलाई दिए, त्यो खान
साथ कुकुर मर्‍यो। अनि तिनले केही पनि खा र मन
मनै—साधूको दोस्रो कुरा पनि सत्य भयो, मेरो प्रा
बाँच्यो। यसपछि उही ठगकी जेठी छोरीले—महाशय,
सुत्न हिंड्नुहोस्, बिछौना तयार छ भनी। यति सुनेर मदन-
पाल भित्र गए। त्यहाँ खाडलमा आगो बाली तेलको कराही
बसाली, उसमाथि काँचो धागोले जेलेको खाट राख
राम्रोसित बिछौना लगाएको रहेछ, मदनपाल त्यस खाट
बस्न मात्र आँटेका थिए, सहसा साधूको तेस्रो कुरा सम्झे
बिछौना तान-तुन पार्दा तलको दृश्य देखियो, अनि डरा
बाहिर आए र साधूको तेस्रो कुरा सत्य भएर ज्यान बचे
कोमा ईश्वरलाई धन्यवाद दिए। यसपछि आजको रात प्राण
रक्षा हुन निकै कठिन देखिरहेको छु भन्ने चिन्तन गर्दै उहाँ
एक छेउमा पल्टिए। एकान्तको मौका पाएर ठगकी कान्छ

छोरी आएर भनी—परदेशी ! ठूलो दुर्भाग्यले तपाईं यहाँ आएर अल्झनुभयो। आज मेरो पालो नहुनाले म विवश छु। आज रातिदेखि मेरी दिदाको पालो सकिन्छ। अतः आजको रात कुनै प्रकारले आफ्नू प्राण-रक्षा गर्नुभयो भने भोलिदेखि मेरो पालो आउँछ, अनि म हजुरको दिलोज्यानले सेवा गर्ने छु। केही गरेर पनि म हजुरको ज्यान बचाउने छु। जुन वेलादेखि हजुरको रूप देखें, त्यसै वेलादेखि म हजुरकी दासी भइसकें। यदि हजुरले मलाई स्वीकार गर्नुभयो भने म आजन्म सेविका भई चाकरी गरिरहने छु। आजको रात जसरी भए पनि ज्यान बचाउने उपाय गर्नुहोस्, अनि मौका मिलाई हामी दुवै यहाँबाट भागौंला। यति भनी आफ्ना कटाक्षले मदनपालको छातीमा घाउ पारी मुसुक्क हाँस्तै प्रस्थान गरी।

त्यो गइसकेपछि ठगकी जेठी छोरी हातमा घातक अस्त्र लिई आइपुगी। त्यसलाई र त्यसको रूप एवं अस्त्र देखेर मनमनै भयभीत भएका मदनपालले सोचे—'आज राति यस पापिनीका हातबाट ज्यान बचउनु कठिन छ र साधुको चोथो कुराले काम दिन्छ कि, दिएन भने आज निश्चय नै मरिन्छ।' त्यो ठगकी जेठी छोरी अउनासाथ राता-राता आँखा पारेर पल्टीरहेका मदनपालको छातीमा चढी र चर्को स्वरले भनी—'चारोटा लाल कहाँ छ, परदेशी !

झिकेर मलाई देऊ, नभए म यो अस्त्र तिम्रो छातीमा रोपेर मारिदिन्छु।' मदनलालले भने—'हे सुन्दरी! मसित लाल छैन। यदि मलाई मार्यौ भने कालेबनियाँले आफ्नू अमल कुकुर मारेर पछुताए झैं तिमा पनि पश्चात्तापमा पर्नेछौ।' त्यति सुनेपछि सुन्दरीले सोधी—'कालेबनियाँले आफ्नू कुकुर मारेर किन पश्चात्ताप गर्नु परेको थियो, त्यो सबै मलाई विस्तारपूर्वक सुनाऊ।' त्यसका कुरा सुनी मदनलाल केही बेरको निम्ति प्राण-रक्षा हुने भयो, आगे ईश्वरको इच्छा भन्न मनमनै सोचेर आदरसाथ भन्न लागे—

## बनियाँको कथा

हे सुन्दरी! सुन—यौटा काले नामको बनियाँ थियो! व्यापार गर्दा एक वर्ष उसलाई निकै नोक्शानी भयो। ऋण तिर्न घरू पनि बिक्यो। अब त्योसित यौटा इमानदार कुकुर मात्र रह्यो। त्यो बनियाँले अब यो कुकुर बन्धक राखी केही रुपिया ऋण लिनुपर्‍यो भन्ने विचार गरी कुकुर लिएर नजीकको शहरमा गएर धनपति भन्ने साहुकहां पाँच हजार रुपियामा बन्धक राखी रुपियां गनेर बुझेपछि भन्यो—ए धनपति साहु! व्याज समेत मूलधन नतिरेसम्म यो कुकुर यहीं रहने छ। पछि रुपियां तिरेर म लैजानेछु। त्यो बनियाँले स्वीकार गरपछि

उ. वर फर्कियो । कुकुर चाहिं धनपति बनियाँको पसलमा पहरा दिन थाल्यो ।

दैवसंयोग एक रात चोर आएर धनपतिको पसलमा पसी मग्रन्त अशरफीका थैलाहरू बोकेर लगे । तर त्यो कुकुरले भुक्नु त के कानसम्म पनि हल्लाएन । उसले सोच्यो—'म अहिले भुकें भने यी चोरहरूले मेरो प्राण लिन्छन् । अब यिनीहरू यो धन लिएर जाउन् हेरौं यिनीहरू कहाँ लगेर लुकाउँदा रहेछन् ! त्यसपछि चोरहरू धन बोकेर अघिलागे, कुकुर तिनीहरूका पछि लाग्यो । ती चोरहरू शहर बाहिर पुगेपछि यौटा ठूलो तलाउ देखेर त्यही तलाउमा सारा धन लुकाई घरको बाटो समाते ! चोरको सबै कृत्य हेरेर कुकुर पनि पसलमा आएर सरक बस्यो ! त्यसपछि उज्यालो भयो । धनपति साहु आफ्नू पसलमा आई हेर्दा अशरफीका थैला एक पनि छैन । अनि आत्तिएर—हरे ! मेरो सर्वस्व चोरियो ! म लुटिएँ ! अब के गरौं ? भन्दै रून कराउन लाग्यो । त्यसको शब्द सुनेर वर-परका धेरै मानिस एकत्र भई धनपतिलाई सम्झाउन-बुझाउन लागे ; अनि बनियाँले भन्यो—'मलाई त्यो अशरफी गएको भन्दा पनि यो कुकुरको बेइमानीमा बर्ता दुःख छ, किन भने यसले भुकेर सचेत गराउन पनि सकेन । बनियाँको कुकुरले यौटा बाटो पहरेदारको काम गर्दछ भन्ने सुनेको थिएँ, त्यो कुरा पनि असत्य भयो । यस बाबत पसले भुकेको भए वर-परका मानिसहरू जाग्ने थिए र

र मेरो धन पनि जाने थिएन । बनियाँको कुरा सुनिरहेको त्यो कुकुर उसको लुगाको फेर समातेर तानिरहेको थियो । उसको चाला देखेर आएका मानिसहरू मध्ये एक-दुई जनाले भने—'हेर यो कुकुर केही भनिरहेको छ, योसित जानुपर्छ, हेर त कहाँ लैजाँदो रहेछ । किनकि बनियाँका कुकुर इमानदार हुन्छन् भनि भन्दछन् । दर्शकहरूका कुरा सुनेर धनपति सहित लश्कर कुकुरको पछिलाग्यो । कुकुरले सबैलाई तलाऊको डिलमा पुऱ्याएर आफू पानी भित्र पसी डुबुल्की मारेर यौटा थैलो दाँतले च्यापी बाहिर ल्यायो । अनि सबैले भने—'हेर, सबै माल-यहीं छ, झिक्न लगाओ ।' अनि धनपतिका सेवकहरू तलाऊमा पसेर सारा माल झिके । अनि धनपति प्रसन्न भएर यौटा कागतमा सबै हाल लेखी कुकुरको घाँटीमा बाँधेर भने—हे इमानदार कुकुर ! म तेरो कार्यले बहुतै प्रसन्न भएँ । तेरै बुद्धिमानीले मेरो हराएको धन पाएँ । अतः म खुसीसाथ भन्दछु—तँ आफ्नू मालिक जहाँ छन् , उहीं जा । फेरि तेरो मालिकले मसित लिए-को कर्जा पनि मैले माफ दिएँ, अब तिर्नु पर्दैन । यति भनी लेखेको पत्र कुकुरको घाँटीमा बाँधी विदा दियो र कुकुर सरासर आफ्नू मालिककहाँ गयो । निकै दिनपछि संयोगले यौटा त्यो कुकुर र त्यसको मालिकको जम्का भेट गयो । 'यो कुकुर साहुलाई धोका दिएर भागी आएछ । साहु मलाई के भन्दो होला । साह्रै लाजमर्नु भयो'—यस्तो विचार आउना-

साथ रिसले कुकुरलाई काटिदियो । त्यसको टाउको छुट्टिए-पछि चिठी भैंमा खस्यो, अनि यो के रहेछ भन्दै उठाएर पढ्न लाग्यो । त्यसको इमान्दारी सम्झेर त्यहीं बसी निकै बेरसम्म रोयो र पछि तोमा गाडियो ।

मैनाले भन्यो—'हे सुगा ! पुरुष जातिको यस्तै कुकृत्य र निर्दयताका कुरा सुनेर मेरो मन पुरुष जातिसित घृणा बढ्छ ।

सुगाले भन्यो—'हे मैना । यसमा त्यो व्यापारीको कुनै दोष छैन, उसले त मेरो कुरामा फरक पारिदियो भन्ने ठानेर मारेको हो यसमा पुरुष जाति-लाई निर्दयी तुल्याउनु अनुचित हो ।'

अब मदनमाल र ठगकी छोरीको कुरा सुन—मदनमालले भन्यो—सुन्दरी ! तिमी पनि मलाई मारेर व्यापारीले जस्तै पश्चात्तापमा पर्नेछौ । यति सुनी ठगकी छोरीले भनी—ठीक छ, आज त मलाई कुरामा भुलाएर आफ्नो ज्यान बचायौ तर अब मेरी बहिनीको पालो छ, त्यो-सित तिमी कदापि बाँच्न सक्तैनौ । यति भनेर आफ्नी बहिनी-कहाँ पुगेर भनी—'ए बहिनी ! मलाई त त्यस परदेशीले विचित्र कथा सुनाएर प्राण बचायो, तर अब त्योसित लाल

फुत्काउने काम तिम्रो जिम्मा छ। दिदीका कुरा सुनी मनमनै खूब प्रसन्न भएकी बहिनीले भनी—'हे दिदी ! यसमा तिमीले चिन्ता लिनु पर्दैन। त्यो परदेशी मलाई लाल नदिई कुनै युक्तिले पनि प्राण बचाउन सक्तैन। यति भनी त्यो मददलाल बसेको स्थानमा पुगेर भन्न लागी—'प्राणनाथ ! अब हजुरले केही कुराको चिन्ता गर्नुपर्दैन। आजदेखि एक महीनासम्म मेरो पालो आरम्भ भयो। हाम्रो अघिदेखि चलिआएको चलन अनुसार दाजू-भाई र पिताले यात्री अथवा परदेशीलाई समातेर ल्याउने र हामी दुवै दिदी बहिनी मिलेर आफ्नाफ्नो पालोमा ती परदेशीलाई ठगेर, मारेर त्यसको सारा धन-माल लिने चलन चलिआएको छ। अब आजदेखि मेरो पालो आयो र म तन-मनले हजुरकी दासी भइसकेकी छू। अब यसमा हजुर जस्तो उचित ठान्नु हुन्छ, आज्ञा दिनुहोस्, म त्यो आज्ञा पालन गर्न तयार छू। यति सुनेपछि ती मदनपालले भने—'हे सुन्दरी ! मैले जुन बेला तिमीलाई देखें, त्यसै बेला-देखि तिम्रो दास भइसकेको छू र तिमीले जे, जति, जस्तो आज्ञा दिए पनि शङ्का नमानी पालन गर्न तयार छू।' मदनपालको मन जाँच्न सुन्दरीले भनी—'हे प्राणधन ! यदि हजुर मलाई तन-मनले चाहनु हुन्छ र मसित कुनै पर्दा छैन भने ती चार ओटा लाल कहाँ छ, भन्नुहवस्। मदनपालले तुरुन्त उत्तर दिए—प्रिये ! ती लाल मेरो तिघ्रामा छ। त्यो यदि तिमीलाई

चाहिन्छ भने मेरो तिम्रा चिरेर झिक। अनि सुन्दरीले भनी—

प्रियतम ! म लालची भोकी छैन, मलाई चाहिएको पनि छैन। मैले त केवल हजुरको मन बुझ्न मात्र भनेकी हुँ। मलाई त केवल हजुरको सेवा गर्न पाए पुग्यो। म त हजुरकी बेदामकी सेविका, दासी हुँ।' अनि मदनपालले भने—'सुन्दरी ! तिमीले गनेको सबै उचित हो तर यहाँ बसेर हामी दुबैको अबाध प्रेम सम्बन्ध चलिरहन सक्तैन किनकि तिम्रा दाजु, पिता र दिदीले थाहा पाउना साथ हामी दुबैको अवश्य प्राण लिनेछन्। अतः तिमीले स्वीकृति दिए हामी यहाँबाट तत्काल प्राण जोगाएर कतै भागिदिनु नै उत्तम छ।

सुन्दरीले फेरि भनी—'हे नाथ ! यहाँबाट प्राण जोगाएर भाग्ने सजिलो उपाय के छ भने मेरा पिताका दुइ ऊँट छन्। यौटा दिनभरिमा सय कोश हिंड्दछ र अर्को चाहिं ऊँट केवल साठी कोश जान्छ। दुवै चाहिं ऊँट लिएर आउनोस्। अनि भाग्ने तयार गरौंला। मदनपाल ऊँट लिन गए तर अत्याहटले गर्दा सय कोश जाने ऊँट ल्याऊनु पर्नेमा स्थानमा केवल साठी कोश जाने चाहिं ऊँट लिएर आए। अनि मदनपाल र ती सुन्दरी दुबैजना बसेर उहाँबाट हिंडे। त्यो ऊँट केवल साठी कोश मात्र हिंडेपछि यौटा जङ्गलको माझमा ऊँट टक्क अडियो। आधा बाटोमा ऊँट अड़िएको देखेर ती दुबैको होश उड्यो अर्थात् हराती गयो। उता प्रातःकाल भएपछि ठगले कान्छी छोरी र

परदेशी नदेखेर––त्यो बदमाश मेरी छोरीलाई फकाएर भागेछ, यति विचार गर्दै ऊँट हेर्न पुग्यो । ठूलो ऊँट छ, मानो कैन मन्ने थाहा पाउनासाथ; मेरो ठूलो ऊँट यहीं रहेछ; त्यो बद-माश कहाँ जाला त, अहिल्यै समातेर ल्याउँछु भन्दै ऊँटमा चढेर हिंड्यो । हिंडेको दुइ घण्टा जतिमै अघिल्लो ऊँट अडिएको जङ्गलमा पुग्यो । मदनपाल त्यो ठगलाई आउन लागेको देखेर डराई सुन्दरीलाई भने––'प्रिये ! ऊः हेर ! तिम्रा पिता आइपुगे । अब यो सङ्कटबाट बचाउने उपाय छिटै गर, नभए यहीं वनमा मारिने छौं ।' उसले भनी––हे नाथ ! डराउनु पर्दैन; उपाय म बताउँछु ; हजुर यो रूखमाथि चढ्नुहोस । मेरा पिता जब हजुर-लाई पक्रन रूखमा चढ्दछन् तब म ठूलो ऊँटमा चढेर हजुर चढेको हाँगामनि ऊँट ल्याउने छु अनि हजुर हाम्फालेर म बसेको ऊँटमा आउनुहोला । अनि हामी यहाँबाट सहजै बाहिर जानेछौं ।' तिनकी प्रियतमाको सल्लाह अनुसार मदनपाल त्यो रूखमा चढेपछि ठग आइपुग्यो र मदनपाललाई रूखमा चढेको देखेर आफ्नू ऊँटबाट वर्ली तिनलाई पक्रन रूखमाथि चढ्यो । उता मदनपालकी प्रियतमा ठूला ऊँटमा चढेर मदनपाल बसेको हाँगामनि आइपुगी । अनि मदनपाल हाम्फालेर ऊँटमाथि बसेर दुवै जना त्यहाँबाट वायु-गतिले जाँदा भए ।

भोलिपल्ट बिहान यौटा शहरमा पुगेर निकै दिनसम्म सुन्दरी र मदनपाल भोग-विलास गरेर आनन्दले त्यहीं बसे । एक दिन मदनपालको मनमा––अब त घर फर्कनु पर्ने हो, तर

यो सुन्दरीलाई साथै लिएर जाउँ भने पिताले के भन्ने हुन् । एक पल्ट देश-निकालाको अवधि अब बल्ल समाप्त भयो । यस कार्यले फेरि रिसाएर डाँढो कटाउने हुन् कि ! यस्तै तर्क गरी सुन्दरी निदाएपछि धर्म, विवेक, विचार, दया, माया सबै बिर्सेर आफ्नू प्राण बचाउने अबलालाई खुकुरीले काटी जो भएको माल-सामान पोको पारी चोर भागे झैं भागेर गयो ।

यति सुनाइसकेपछि मैना बोली—हे सुगा ! यस्तै अनेक उदाहरण छन् जसले पुरुष मात्र सित मलाई अरुचि, घृणा भएको हो । बिचरी त्यो सुन्दरीले जसको प्राण-रक्षा गरी उसै द्वारा प्राण गुमाई । पुरुष जातिको यस्तै दुर्व्यवहारले गर्दा म तीभन्दा धेरै पर रहने इच्छा गर्दछु । मैनाका यस्ता कुरा सुनी सुगाले फेरि भन्यो—'तिम्री कथन पनि अनुचित होइन, तर अकस्मात मलाई यौटा कथाको सम्झना भएर आयो । त्यसमा नारी-जातिको अविवेक र दुष्टताको कुरा ऐना हेरे झैं छर्लङ्ग हुन्छ, त्यो तिमी एकाग्र भएर सुन ।

तोता-मैनाको कथा पहिलो भाग सकियो ॥ १ ॥



# तोता-मैनाको कथा

# दोस्रो भाग

शुगाले मैनालाई भनेको चौथो कथा--

शुगाले भन्यो—हे मैना ! पद्मपुर नामको निकै ठूलो र राम्रो शहर थियो । त्यहीं यौटा निकै धनी बनियां रहन्थ्यो । त्यसको यौटा रामदास नामको छोरो थियो । त्यसको मित्रता राजा र मन्त्रीका छोरासित थियो । एक दिन रामदासले आफ्ना दुवै मित्रसित भन्यो—मित्र हो ! पर्सितिर मैले ससुराली जानुपरेको छ, अतः तिमीहरूले पनि मसित अवश्य जानुपर्छ । त्यसका कुरा सुनेर मित्रहरूले भने—'हे मित्र ! किन नजाने ! अवश्य जाउँला, तर हामी तिम्रो ससुरालीमा जाने छैनौं, अन्तै कहीं बसौंला ।

अन्त्यमा उसले तोकेको दिन आइपुग्यो र रामदास ससु-राली जान हिंड्यो । उसका मित्रहरू पनि साथमा हिंडे । भोलि पल्ट रामदास ससुराली पुग्यो । अनि राजकुमारले भने—'हे मित्र ! हामी धर्मशालामा बस्तछौं, तिमी आफ्नो ससुराली

जाऊ। यति भनी तिनी र मन्त्रीका पुत्र रामसिंह धर्मशालामा गए। रामदास आफ्नो ससुराली गयो। जुन बखत रामसिंह र राजकुमार धर्मशाला भित्र पस्न लागेका थिए, धर्मशालाको ढोकामा उभिएकी यौटी बुढी रुनलागी। दुबै मित्रले देखे र मन्त्रीको छोराले रुने कारण सोध्न मन गरेका थिए तर डेराको बन्दोबस्त गरेर सोधौंला भनी सरासर भित्र गए। यौटा राम्रो कोठा हेरेर त्यसैमा सामान राखी बसे। त्यही धर्मशालाको साम्न्ने यौटी अत्यन्त राम्री वेश्या बस्तथी। राजपुत्रको नजर त्यस वेश्याभाथि पर्नासाथ मोहित भए र मनमनै त्यसको रूप, गुण र सौन्दर्यको वर्णन गर्‍यो। आजको रात यसै वेश्यासित बिताउन पर्दछ भनेर त्यसलाई डाकन पठाई आफ्नो साम्न्ने बसाले। जब राजकुमार र त्यो वेश्या आनन्द मनाउँदै निदाए तब रामसिंह उठेर त्यस बुढियाकहां गएर सोधे—'आमै! हामी दुबै जनालाई आउनलागेको देखेर तिमी किन रोएकी; त्यसको कारण मलाई भन। अनि बुढीले भनी—बाबू! मैले रुने कारण अरू केही होइन; अहिले तिम्रो साथीसित सुतेकी त्यो वेश्याको पेटमा सर्पिणी छ। जब कुनै परदेशी त्योसित ऐश-आराम गरेर निदाउँछ, तब त्यस वेश्याको पेटबाट एक सर्पिणी निस्की परदेशीलाई टोकेर फेरि त्यसकै पेटमा पस्तछे। यही क्रमले त्यो वेश्याले अनेक परदेशीहरूको प्राण लिइसकी। अतः यस नगरीमा यस्तै अन्धेर छ। राजाले पनि यस विषयमा कुनै

विचार गर्दैनन् । यस धर्मशालामा नित्य जसो यौटा परदेशीको हत्या भइरहन्छ । यसै कारण तिमीहरूको सौन्दर्य र कलिलो उमेर देखेर——आज यी विचराहरू पनि यस वेश्याको रूपमा आशक्त भई मारिने छन् । यही चिन्ता परेर म रोएकी हुँ । त्यस बुढियाका यस्ता कुरा सुनी रामसिंह जुरुक्क उठेर राजपुत्र र वेश्या निदाइरहेका स्थानमा तरवार लिएर पहरा दिन बसे । झण्डै आधा रात बितेपछि वेश्याको पेटबाट सर्पिणी निस्की र भूमिमा तेर्सिन लागी । ठीक त्यही मौकामा रामसिंहले तरवार चलाएर सर्पिणीको दुइ टुका बनाई आफ्नो ढालले त्यहीं छोपिदिए । त्यसपछि——राजकुमारको रक्षा त भयो, अब यस नगरको पनि केही हाल खबर जान्नु पर्‍यो भन्ने विचार गरी, तरवार हातमा लिएर धर्मशालाको फाटकबाट बाहिर निस्के । बाहिर निस्कना साथ तिनले यौटी षोडशा युवती सोह शृङ्गार गरेर आउन लागेकी देखे । यस स्त्रीको हाल जान्नुपर्दछ भन्ने विचार गरेर त्यसको पछिलागे । त्यो युवती नजीकैको यौटा जङ्गलमा कुनै योगीको कुटीमा पुगी । उता त्यो योगी पनि त्यहीं चन्द्रमुखीको रूप-सुधा पान गर्न बाटो हेरिरहेको थियो तर मनमनै——आज किन यस बेलासम्म मेरी प्राणप्यारी आइनन्——भन्ने विचार गरिरहेको थियो । सामुन्ने त्यो अनिन्द्य रूपसीलाई देख्नासाथ सहसा राता-राता भइसकेका दुबै नेत्र तरेर यसरी

सोध्यो—ए वेश्या ! तैंले आज किन यति अबेर गरेकी ? यसको यथार्थ कारण मलाई बता। त्यो कामिनीले उत्तर दिई—हे महाराज ! आज मेरा पति मलाई लिन आएका हुनाले पतिको स्वागत एवं सत्कारमा अबेर भयो ! फेरि घरका सबै जहान सुतेपछि म यता आएकी हुँ। ती युवतीका त्यस्ता कुरा सुनेपछि योगीलाई रिस उठ्यो र दुवै हातले त्यस स्त्रीको मुख समाई नाक टोकिदियो। त्यो स्त्री रुँदै आफ्नू घरतिर हिंडी। त्यो देखेर रामसिंहलाई पनि रिस उठ्यो र यस बेइमानले यो युवतीको विना अपराध नै नाक काटिदियो। अतः यस पापीले पनि यो संसारमा जीवित रहनु उचित छैन—यति विचार गरी आफ्नू तरवारले त्यो दुष्ट योगीलाई एकै चोटमा दुइ टुक्रा पारिदिए। योगीको टाउको गिंड़बाट छुट्टिएर भूमिमा खस्यो। त्यसरी त्यो योगी मरेपछि रामसिंह त्यहाँबाट हिंडे। अलि पर पुगेपछि यौटा राम्रो देवीको मन्दिर देखे—त्यहां चार जना चोरहरू बसेर परस्पर कुरा गरिरहेका थिए। रामसिंह तिनीहरूको कुरा सुन्न चुपचाप त्यहीं यौटा कुनामा उभिइरहे। अनि ती चारमध्ये यौटा चोरले—आज मेरो हातमा धेरै धन-माल आयो भने म यिनै देवीलाई बोको चढाउने छू। अनि अर्को चोरले भन्यो—आज धेरै धन हात लाग्यो भने असल रक्सीको बोतल ल्याएर चढाउने छू। तेस्रो चोरले भन्यो—आज मेरो हातमा प्रसस्त

धन आयो भने ब्राह्मणलाई इच्छा-भोजन गराउने छु । चौथो चोरले भन्यो—मित्र हो ! मेरो प्रतिज्ञा सुन, यिनै देवीको कृपाले आज बढी धन-माल हात लाग्यो भने—म यहाँका राजाकी कन्यालाई पलंग समेत यहीं ल्याएर देवीलाई बलि-दान दिनेछु। यसै प्रकार ती चारै जना चोरहरू आ-आफ्नो प्रतिज्ञा गरेर त्यही शहरमा चोरी गर्न गए । दैवसंयोग चारै जनाले इच्छित धन चोर्न पाएर सबै धन लिएर त्यही मन्दिरमा आइपुगे । अब यो धन बराबर बाँडौं भन्ने कुरा हुँदा चौथो चोर भन्छ—मित्र हो ! धन त पछि बाँडौंला, पहिले गएर राजकुमारीलाई ल्याउनु पर्‍यो । यति सल्लाह गरी सबै चोर गएर राजकन्याको पलङ्गसमेत बोकेर ल्याए । जब चौथो चोरले राज-पुत्रीलाई मन्दिर भित्र लगेर तिनको शिर काट्न आँटेको थियो रामसिंहले एकै चोटमा त्यस चोरको गर्दन छुट्याइदिए । राजकुमारीलाई भने—तिमी मेरी धर्मकी बहिनी भयौ, अब डराउने काम छैन । बरू छड्ड मेरो पछाडितिर आएर तमाशा हेरिराख ।' राजकुमारीलाई पछाडि लुकाएर आफू नांगो तरवार लिई मूल ढोकाको आडमा उभिए । पहिलो चोर मित्र गएको निकै बेर हुँदा पनि नफर्के-कोले शेष तीन जना चोर तर्क गर्न थाले—त्यो राजाकी छोरी-लाई देखेर मोहित त भएन । यस्तो विचार गरेर यौटा चोर-लाई हेर्न पठाए । त्यसले गएर मूल ढोकाबाट चियाउना

साथ भित्रबाट मौका पर्खिरहेका रामसिंहले एकै चोटमा त्यसको पनि मूला काटे झैं दुइ टुक्रा पारिदिए। दोस्रो चोर हेर्न गएको पनि निकै बेर भयो अनि दुइ जना मध्ये एक जना फेरि हेर्न बुझ्न गयो। त्यसले ढोकामा घाँटी छिराएर भित्रको स्थिति जान्ने चेष्टा गरेको थाहा पाउनासाथ रामसिंहले त्यसको पनि दुई टुक्रा पारिदिए। त्यो गएको पनि अबेर भयो र ती सबै के गरिरहेका छन् भनेर चौथो चोर पनि बुझ्न गयो र ढोकाबाट चियाउनासाथ रामसिंहले त्यसको पनि दुइ टुक्रा पारिदिए। त्यसपछि राजकन्यासित भने--'हे बहिनी! अब तिमी आफ्नू महलमा जाऊ। रामसिंहको यस्तो कुरा सुनी राजकन्याले भनिन्--'हे भाइ! आज तपाईले मेरो प्राण बचाइदिनु भयो र अब मलाई मेरो महल सम्म पनि लगिदिनु हवस्। किनकि मैले आजसम्म घरको बाहिर पाईला राखेकी छैन र म बाटो पनि जान्दिन। अब यति कष्ट तपाईले अरू गरिदिनु भए मेरो उद्धार हुने थियो। राजकुमारीको त्यस्तो कुरा सुनेपछि रामसिंहले 'नाइँ' भन्न सकेनन् र साथ लागेर गए। अघि चोरहरूले राजकुमारीलाई तल ओह्रालेको स्थानमा कमन्द झुण्डिइरहेको देखेर उनले भने--'हे राजपुत्री! अब तिमी यसै कमन्द द्वारा आफ्नो महलमा जाऊ। म यहींबाट फर्कन्छु अनि राजकुमारीले मुसुक्क हाँसेर भनिन्--'महाशय! यहांसम्म

ल्याइदिए पछि अलिकतिको निम्ति किन निराश पार्नुहुन्छ ! जसरी यहाँसम्म ल्याइदिनु भयो त्यसै गरी महल भित्रसम्म पनि पुऱ्याइदिनु भए के हानि होला !' त्यति सुनेपछि रामसिंहले राजकन्याको कोठासम्म तिनलाई लगिदिए र 'अब म जान्छु' भन्दा। तिनको रूप र दयालुतामा मोहित भएकी ती राजपुत्रीले रामसिंहलाई बाहु-लताले बाँटीमा बेहेर भनिन्—'हे प्यारा, प्रियतम ! तिमीले मेरो प्राण-रक्षा गरिदियौ, त्यसको साटो अब मसँग मेरो पलङ्गमा बसेर आजसम्म कसैले पनि छुन नपाएको यौवनको आनन्द लेऊ र मलाई आफ्नु काखमा राखेर मेरो सुन्दरतारूपी तलाउको प्रेम-रस चाख। यो मौका बारम्बार आउन्न ! म तिमीप्रति तन-मन-वचनले आशक्त भएकी छु।' राजकुमारीको यस्ता कुरा सुनेर रामसिंहले भने—'बहिनी ! यो के गजबको कुरा गर्दछौ ! मैले तिमीलाई 'बहिनी' मानिसकेको छु। अब तिमी मलाई किन नरकमा हाल्न खोजिरहेकी छौ ? किन आफ्नो र मेरो धर्म नाश गर्न आँटेकी छौ ? यो काम मचाट हुने आशा नराख, म कदापि यस्तो काम गर्न सक्तिन।' अनि राजकुमारीले भनिन्—मेरो इच्छा पूर्ण गर्दैनौ भने तिमीले मर्नुपर्दछ भन्ने कुरा पक्का जान। म चोर, चोर भनेर कराउँछु, तिमीलाई रमनले पक्रन्छ, अनि के

हुनेछ तिमी स्वयं विचार गर्न समर्थ छौ। रामसिंहले भने—गुनको सट्टा बेगुन भनेको यही रहेछ। मैले के गरें—तिमी के गरिरहेकी छौ! यति भनी आफूलाई तिनको बाहु-पाशबाट फुत्काई कमन्दकै बाटोबाट तल झर्न लागे। त्यसै बेला चोर-चोरको ध्वनि सुनेर रमनमा डुलिरहेको कोतवाल त्यहाँ आइपुग्यो र भाग्न लागेका रामसिंहलाई पक्रेर कचहरीतिर लगे। त्यस बेला रामसिंहको मनमा यस्तो विचार आयो—हरे! कस्तो आश्चर्य! धर्म गर्दा पाप आइलाग्यो र अझ के-के हुने हो पत्ता छैन! यति कथा सुनाई सुगाले भन्यो—अब यो कथा यहीं थन्क्याई राजकुमारको हालत वर्णन गर्दछु, तिमी ध्यान दिएर सुन, आँखा निहुराउने काम छैन। यहाँ त केवल कुरा-कानीको हार-जीत मात्र हो।

## कथा राजकुमारको—

सुगाले भन्यो—हे मैना! यता जब राजकुमारको निद्रा खुल्यो तब झलमल्ल घाम लागिरहेको थियो। यसो चारैतिर नजर डुलाएर हेर्दा वेश्यालाई मरिरहेकी र मित्र रामसिंह पनि नभएकाले छक्क परे। फेरि यो कसरी मरी भन्ने सयले पनि सताउन लाग्यो। त्यसै बेला त्यो रण्डीकी संरक्षिका (नायिका) पनि आइपुगी र राजपुत्रलाई जीवित देखेर ठूलो आश्चर्यमा परी र मनमनै विचार गर्न लागि—आज के

भयो र यो परदेशी जीवित छ। अब यसको झिटिमिटी हात लाग्ने भएन इत्यादि विचार्दै छोरीको ओढ्ने तान्दा त मरिरहेकी देखी र डाँको छाडेर गुहार माग्दै रून कराउन थाली। त्यो स्वर सुनेर धर्मशालाका निकै मानिसहरू जम्मा भए र पुलिसको अधिकारी दरोगाले धर्मशालाको कार्यकर्तालाई सोधे—यो कसरी मरी ? उसले भन्यो—सरकार, यो वेश्या हिजो राती असल हिसाबले राजी खुसी यो परदेशीसित सुतेकी थिई, भगवान् जानुन् यो कसरी मरी ! मलाई केही पनि थाहा छैन। त्यसपछि दरोगाले राजकुमारसित सोधे—परदेशी ! यो वेश्या कसरी मरी ? सारा कुरा बयान गर। राजपुत्रले भने—'दरोगा साहेब ! यसको मृत्युको विषयमा मलाई केही पनि थाहा छैन। यो पूर्णरूपले स्वस्थ सी हिजो राती मसँग सुतेकी थिई। आधा रातसम्म हामी ऐश आनन्द गरिरहेका थियौं, त्यसपछि सुत्यौं। अहिले यो मरिरहेकी छ, यो कसरी मरी मलाई केही पनि थाहा छैन।' राजपुत्रका त्यस्ता कुरा सुनी रण्डीको मृत शरीर डोलीमा हाली, राजकुमारलाई बाँधेर कचहरी हिंडे। सुगा भन्दछ—हे मैना ! अब राजपुत्रलाई कचहरीमै छाडो ससुराली गएको त्यो बनियाँपुत्र रामदासको विषयमा सुन—

कथा बनियाँ-पुत्रको-

हे मैना ! जब बनियाँको छोरो रामदास ससुराली पुग्यो तब साझ पर्न लागेको थियो। त्यसका सासू-ससुराले निकै आदर सम्मान गरेर कोठामा बसाले। घरको अन्य सदस्यहरूले कुशल समाचार सोधे। निकै बेरपछि अनेक थरिका खानेकुराहरू पकाई खान दिए। त्यसपछि उसको सासूले आराम गर्ने कोठा खटाई र रामदास कोठामा गएर आफ्नो स्त्रीका साथमा सुत्यो। आधा रात बितेपछि थाकेको रामदास भुसुक्क निदायो। त्यसकी स्त्रीलाई किन निद्रा लाग्दथ्यो। ऊ विचार गर्दै थिई—भोलि त मैले योसँग जानै पर्छ भन आजको एक दिन मात्र भएपनि आफ्नो जार (प्यारा) संग मोज मारेर आउनु पर्‍यो। यति विचारेर बिस्तारै उठी र सरासर आफ्नो जार पति कहाँ पुगी। उसले आज यति अबेर किन भयो ? भनी सोध्दा स्त्रीले—आज मेरो पति मलाई लिन आएको हुनाले अबेर भयो भन्नासाथ त्यो रिसाएर त्यस स्त्रीको नाक टोकिदियो। त्यो स्त्री त्यहाँबाट रुँदै घर आई र मनमनै सोची-यो मेरो लोग्ने यहाँ आउनासाथ मेरो यस्तो दुर्गति भयो भने अब यसैलाई दोषी तुल्याउँछु। यति विचारेर अकस्मात् कराई—गुहार ! गुहार ! मेरो लोग्नेले मेरो नाक काटिदियो, आओ सबैजना हेर ! त्यसले रातका बीचमा कराएको सुनी घरका सबै मानिस उठेर आई

दियो । पुलिसले रामदासलाई पात्ता कसेर दरबारमा ल्याए । हे मैना ! पुलिसले यता रामदासलाई बाँधेर ल्याए, उता दरोगाले रामसिंहलाई बांधेर ल्याए । तीनै जना मित्र यसरी पक्रिई दरबारमा ल्याइएपछि ती तीनै जना ताजुब मानेर परस्पर हेराहेर गर्नलागे । अनि राजाले सोधे--'हे बनियां पुत्र ! तिमीले यस स्त्रीको नाक काटेको हो, भन ?' यति सुनि रामदासले केही उत्तर दिन नपाउँदै मन्त्री-पुत्र रामसिंहले बीचैमा कुरा काटेर भने---सरकार ! यी दुबैलाई केही पनि थाहा छैन, इनको विषयमा सबै कुरा म भन्दछु--- यी सामुन्ने उभिएका राजकुमार हुनु र अर्को चाहिं बनियांको छोरा हो । हामी तीनै जनामा गहीरो मित्रता छ । यहां यो बनियां पुत्रको ससुराली छ । यो आफ्नी पत्नी लिन आएको हो । यो ससुराली गयो, हामी दुबै धर्मशालामा बस्न गयौं । त्यस धर्मशालामा जो वेश्या थी, त्यसको पेटमा यौटी सर्पिणी थिई । जुन परदेशी त्योसित प्रेम गर्दथ्यो त्यसलाई आधा रातमा सर्पिणी निस्केर मारिदिन्थी । आज राती पनि जब राजकुमार सुत्यो तब म पहरा दिन बसें । त्यो सर्पिणी निस्केर मेरो मित्रलाई टोक्न आंटेको देखी मैले त्यसलाई दुइ टुक्रा पारी त्यहीं ढालले छोपिदिएँ । त्यो वेश्या मर्ने कारण यही हो । विश्वास लाग्दैन भने अझ पनि सर्प मरेको त्यही कोठामा होला, हेर्न पठाए थाहा हुनेछ । रामसिंहको

फेरि गुनेर तत्काल हेर्न मानिस पठाए। उसले सर्पको टुक्रा ल्याएर हाजिर गरिदियो। अनि राजकुमारलाई छाडिदिए। त्यो वेश्याकी नायिकालाई फांसीको सजाय दिइयो। रामसिंह फेरि भन्न लाग्यो—सरकार! म धर्मशालाबाट निस्केर कतै जाने विचारले ढोकामा उभिएको बेला यो मेरो मित्रकी स्त्री-लाई जंगलतिर जान लागेकी देखें र म पनि यसको पछि लागें। यो स्त्री निकै पर गएर योगीको आश्रममा पुगी, अनि उसले भन्यो—'ए हरामजादी! आज आउन किन यति अबेर गरिस्?' अनि यसले भनी—'आज मेरो लोग्ने मलाई लिन आएको हुनाले आउन अबेर भयो। घरका जहान सुतेपछि आएकी हुँ।' यति सुन्नासाथ त्यस योगीले रिसाई यसको नाक दांतले टोकेर छुट्याइदियो। त्यस दुष्टको त्यस्तो अन्याय देखेर मैले सहन नसकी तरवारले त्यसलाई दुइ टुक्रा पारिदिएँ। यदि विश्वास लाग्दैन भने मानिस पठाएर योगीको टाउको मगाए त्यसको मुखमा यस स्त्रीको नत्थ समेतको नाक अझ पनि होला। अनि पुलिस पठाएर योगीको शिर मगाई हेर्दा सत्य रहेछ। अनि बनियांको छोरालाई पनि छाडिदिए।

मन्त्री-पुत्र रामसिंहले फेरि भने—महाराज! त्यहांबाट छुटेपछि म देवीको मन्दिरमा आएँ। त्यहां चार जना चोर सल्लाह गर्दै थिए—'आज प्रसस्त धन हात लाग्यो भने राज-

कुमारीको शिर तिम्रो चरणमा चढाउने छौं।' त्यसपछि उनीहरू चोर्न गए। म त्यहीं मन्दिरमा लुकेर बसिरहेको थिएँ। त्यसपछि ती चोरहरू धेरै धन र राजकुमारीलाई पलंग समेत लिएर आए अनि हजुरकी छोरीको बलि दिन आँटे तर ती चारै जना चोरलाई मैले पालैसित काटिदिएँ। अनि राजकन्यालाई महलसम्म पुऱ्याउन आएँ। कोठामा पुगेपछि राजकन्याको नीयत बिग्रियो र मलाई पथ-भ्रष्ट पार्न खोजिन् अर्थात् मेरो इच्छा पूर्ण गर्दैनौ भने तिमीले मर्नु पर्दछ भनिन्। तर मैले तिनलाई बहिनी भनिसकेको हुनाले बलपूर्वक हात फुस्काएर त्यहाँबाट भाग्न लाग्दा 'चोर-चोर' भनेर कराई मलाई पक्राइन्। यदि मेरो कुरामा विश्वास लाग्दैन भने मन्दिरमा अझ पनि उनको पलङ्ग र चोरहरूका लाश तथा चोरीको सामान सबै होला, हेर्न पठाए विश्वास हुनेछ।

रामसिंहका त्यस्ता कुरा सुनेर राजालाई आश्चर्य लाग्यो र मन्दिरमा हेर्न पठाउँदा सत्य पाए। अनि आफ्नो छोरीलाई पनि फांसी दिने आज्ञा दिए र रामसिंहलाई जाने आज्ञा दिए। सुगाले भन्यो—हे मैना! स्त्री जातिको यस्तै कुरा सुनेर म नारीमाथि कुनै कुरामा पनि भर पर्न सक्तिन। सुगाका यस्ता कुरा सुनी मैनाले भनी—संसारमा सबै स्त्री समान हुँदैनन्। अब म यसको जवाब दिन्छु, तिमी ध्यान दिएर सुन।

# पाँचौं कथा—मैनाले सुगासित भनेको

मैनाले भनी—हे सुगा ! मानपुर नामको यौटा ठूलो तथा राम्रो शहर थियो, त्यहां वीरसेन नामका राजा राज्य गर्दथे। तिनको मदनसेन नामको यौटा छोरो रूपवान, बुद्धिमान र नवयुवक थियो। कुनै दिन राजाकहां यौटा व्यापारी आयो र अनेक प्रकारका सामग्री बेच्न ल्याएको थियो, त्यसमा यौटी राजकुमारीको तस्वीर मदनसेनलाई देखायो। त्यो चित्र देखेर मदनसेन निकै प्रसन्न भयो र व्यापारीसित सोध्यो —यो कसको चित्र हो ? यो देख्नासाथ मेरो हृदयमा प्रेमले पिछ खेल्न थाल्यो। राजपुत्रको कुरा सुनी व्यापारी भन्न लाग्यो—

छ देश कंचनपुर सिन्धुपार।
छन् इन्द्रसेन भूपति एक सुन्दर ॥
तिन्की सुता इन्दुवदन् छ नाम।
सौन्दर्यकी छन् तिनी श्रेष्ठ धाम ॥

व्यापारीको त्यति कुरा सुनेपछि राजकुमारले उसलाई बिदा दिए र मनमनै जबसम्म तो सुन्दरी प्राप्त हुनिन्, तबसम्म मैले बांच्नु व्यर्थ छ। जुन किसिमले भए पनि तिनलाई ल्याउनु अत्यावश्यक छ—यति विचारी आफ्नू शरीरको

राजसी पोशाक र गहनाहरू सबै फ्याँकी गेरुवा लुगा लगाई, खरानी घसी, संन्यासी भेष बनाई घरबाट प्रस्थान गर्ने पक्का गरेको सुनी राजा चिन्तित भएर छोरोसित भन्नलागे—

हे बाबू ! तिमीलाई के दुख ठुलो आई पर्‍यो लौ भन ।
हामोलाई त्यजेर भेष किन यो ऐस्तै गर्‍यौ धारण ॥
इच्छा के मनमा छ त्यो पनि सबै, सुन्छु म विस्तारले ।
त्याग्छौ सम्पत्ति बृद्धलाई कसरी, के बातको दोषले ॥

पिताको यस्तो माया लाग्दो वचन सुनी मदनसेन भन्दछन्—

बिन्ती छ मेरो कर जोरि आज ।
चाहिन्न कबै बन्धु हितू समाज ॥
ती सुन्दरीमा मन लोभियो यो ।
पाऊँ बिदा जान्छु विलम्ब भैगो ॥

यति भनी मदनसेन पिताबाट बिदा भएर हिंडे । त्यसै मौकामा आमा रूँदै आएर भन्न लागिन्—

भेष लियौ योगीको यो, कस्तो कारण के परी ।
त्यागी राज्य र बन्धुहरू, जान्छौ कस्तो पीर परी ॥
इच्छा आफ्नु भन तिमी, शंका त्याग गरी सब ।
माताको ममता जानी, निष्ठुरी बन्दछौ अब ?

आमाको यस्ता कुरा सुनी मदनसेन विनयपूर्वक आफ्नू दुःख बिसाउँछन् ।

राख्छु हे जननी ! प्रसन्न मनले यी पाउमा मस्तक ।
पाऊँ जान बिदा मलाई दिनुहोस् आनन्दले आसिक ॥

मेरो चित्त लगिन् खिचेर बलले, ती सुन्दरीले अब।
लाग्यो तुच्छ मलाई राज्यसुख औ प्रासाद यो वैभव॥

छोराको यस्तो कुरा सुनेर महारानी बिचेत भएर ढलिन्। त्यसै मौकामा मदनसेनकी विवाहिता रानी आइपुगेर भन्न लागिन्—

गर्नू भयो किन बिहे अघि हात पक्री।
पाइन्न जान नछिनीकन प्रेम-सिक्री॥
फालेर यो किसिमले मझधार माहाँ।
पाल्नू हुँदैछ यसरी बनि योगि काहाँ॥

आफनी प्रियतमाको यस्तो बिन्ती सुनी मदनसेन भन्दछन्—

दोहा—रानी मनमा धैर्य धरे दुःख नमाने चित्तमा।
चाहें ने भ फिरी यहीं, आउँछु तिम्रो पासमा॥

मदनसेनका त्यस्ता कुरा सुनी रानी पनि चेत हराएर भूमिमा ढलिन्। अनि मदनसेन प्रियतमाले समाएको हात फुस्काई मुख मोडी माया-ममताको बन्धन तोडी जंगलको बाटो लागे। निकै बेरपछि चेत आयो र रूँदै भन्नलागिन्—

सखी! छाडि गए निठुरी डुंगा झैं मन पारी।
भकन तिनी बिनु जग दुःखको भारी॥
देख्दा शून्य पलंग कन घरमा, फाट्दछ मेरो छाती।
सुखदायी चिज लाग्दछ, देख्दा मनमा खूब नजाती॥
हाय हाय! गरि हे सखी! दिन अरू रात गुजार्छु।
निद्रामा पनि उठि उठि मेरा प्रियतमलाई पुकार्छु॥

आँखामा अब नींद नआई रोइ बिते सब राती।
प्रियतम बिना जान्छ कसरी दिन, छैन कुनै अब साथी॥

हे सुगा! मदनसेन झैं दया हीन (निर्दयी) कोही पुरुष होलैनन्। आफ्नी प्राणप्रियाले गरेको विलापमा तिनलाई अलिकति पनि दया लागेन। जाँदा-जाँदा निकै दिनपछि अनेक कष्ट सहँदै चन्द्रकिरण बसेको शहरमा पुगेर उसकै लोपी (चित्रसारी) को झ्याल मुनि डेरा जमाएर बसे। संयोगले एक दिन चन्द्रकिरणले आफ्नू झ्याल खोलिन् र तिनको नजर मदनसेन माथि पर्‍यो र परस्पर दुवैका नयन चार भए अनि चन्द्रकिरण पनि मदनसेनको सौन्दर्यमा आशक्त भई र भन्न लागि—

हे योगी! को हौ तिमी! कुन हो तिम्रो देश।
के कारण तिमिले लियौ, यो योगीको भेष॥
देख्दा तिम्रो रूप, भयो मोहित् मेरो मन।
गर्नेछु अर्पण स्वयं तन-मन यो यौवन।

ती चन्द्रकिरणका यस्ता मीठा कुरा सुनी मदनसेनले प्रसन्न भएर भने—

तिम्रो सुनें गुण स्वरूप र नाम जैले।
यो रूप धारण गरें बुझि लेउ मैले॥
आएँ यहाँ सब त्यजी सुख योग धारी।
आएर दर्शन दियौ खुशी छु म प्यारी॥
दया कर्थ तिमीले गरेउकि मन्मा।
सबै पुग्छ इच्छाहरू एक छिन्मा॥

कहाँबाट आयौ भनी यो न सोध।
म आएँ अती दूर देखी हिंडेर ॥

मदनसेनको इच्छा बुझी चन्द्रकिरणले भनिन्—

योगी तिम्रो रूपसा लाग्यो मेरो मन।
मान्दैछु डर चित्तमा जाला कि जीवन ॥

मदनसेनले उत्तर दिए—

जे होला पछिको कुरा, मैले मान्दिन क्लेश।
त्यागें तिम्रै निम्तिमा आफ्ना बन्धु स्वदेश ॥

मदनसेनको त्यस्तो कुरा सुनी चन्द्रकिरणले भनिन्—हे योगिराज ! मेरो मायामा तिम्रो ज्यान जाने डर छ। किनकि जो व्यक्ति मेरो प्रेममा अल्झेर यहाँ आए तिनलाई मेरा पिताले झ्यालखानमा थुनिदिएका छन्। तिनीहरू झ्यालखान भित्र अनेक कष्ट भोगिरहेका छन्। यस कारण मेरो सल्लाह मान्दछौ भने आफ्नो देश फर्केर जाऊ। यो मोहमा व्यर्थ ज्यान नअल्झाऊ।

चन्द्रकिरणका यस्ता कुरा सुनी मदनसेनले उत्तर दिए—

गडी प्रेमको बाण आएँ यहाँ।
बताऊ प्रिये ! लौ म जाऊँ कहाँ ॥
मलाई कुनै बातको छैन डर चित्त माहाँ।
फर्कन्न तिमीलाई नलिई स्वदेशमा ॥
छ तिम्रो जती प्रेम यो चित्त माहाँ।
त्यसैले म दिन काट्तछु सम्झि याहाँ ॥

मदनसेनको यस्तो विचार जानेर चन्द्रकिरणले भनिन्---

हे योगी ! सुन घात यो मैले भन्छु जती ।
डोरी द्वारा आऊ तिमी माथि, हे सुमती ॥

मैनाले भनी---हे सुगा ! त्यसपछि चन्द्रकिरणले कमन्द (एक प्रकारको डोरी अथवा माथि चढ्ने साधन) खसालिदिइन् । त्यसैलाई समाती मदनसेन प्यारीको कोठामा पुगे र आफ्नू भाग्यलाई सन्हाउन लागे । अनि चन्द्रकिरण प्रियतमका बाँटीमा झुण्डिई भन्न लागिन्---

जती गर्दछौ प्रेम मनले मलाई ।
म गर्छु तिमीलाई बर्ता बढाई ॥
लगाऊ छिटै छातिमा छाति प्यारा ।
बगाऊ दुवैले मिलि प्रेम-धारा ॥
म भन्दा तिमीले बढी दुःख पायौ ।
त्यही कष्टले नै गरी भेटन पायौ ॥
पिताको म डरले नहटछु पछाडि ।
म खप्नेछु सन्ताप बढ्दै अगाडी ॥

मैनाले भनी—हे सुगा ! यही क्रमले आनन्द र सुख भोगमा निकै दिन बितेपछि एक दिन मदनसेन बिहानी पख माथिबाट झर्दा रमन घुम्ने कोतवालले देखेर भन्न लाग्यो—'ए बदमाश ! तँ को होस् ! रात्रिको बीचमा महलमा चोरी गर्न आएको तँलाई म छाड्दिन ।'

कोतवालका यस्ता कुरा सुनी मदनसेनले हात जोरेर

भने—म महलमा चोर्न आएको होइन, मलाई क्षमा गर, अब यस्तो अपराध गर्ने छैन ।

मदनसेनको कुरा सुने पनि कोतवालले मानेन र सिपाही लाई डाकेर पाता कसी बांध, यसैले नगरका सारा प्रजालाई कष्ट दिएको रहेछ, बल्ल पक्रियो भन्दै थानामा लगे । भोलि पल्ट अड्डामा लगेर रातीको सारा हाल राजालाई सुनायो । राजाले सबै कुरा सुनी मदनसेनलाई सश्रम कारावास (झ्याल-खान भित्र परिश्रम गर्नुपर्ने) सजाय सुनाए । यो कुरा आफ्नी सखीबाट चन्द्रकिरणले सुनेपछि एकछिन त मूर्छा परी पछि होश आयो र अनेक विलाप गर्दै भन्न लागी—

आँसू बग्दछ नेत्रबाट प्रियको, त्यो रूप सम्झी दिँदा ।
मन्मा पीर बढेर नै धुरू-धुरू रुन्छू म दुःखी हुँदा ॥
नाच्छन् मत्त भई मयूर वनमा, देख्दा घना बादल ।
हान्नन् बाण तिखा-तिखा हृदयमा, को हो? भनी कोकिल ॥

रुन्छू मा[illegible] वसन्तमा प्रिय सखी ! बाधा दिँदा कामले ।
सम्झन्छु प्रियलाई यो बखतमा, भेटने ठुलो आशले ॥
छन् मेरा अब कैदमा प्रिय भनी जानी छिनाले गरी ।
दिन्छन् कष्ट अनेक पंचशरले, मेरो शरीरै भरी ॥

मैनाले भनी—हे सुगा ! यसरी चन्द्रकिरणका दिन र रात विरह वेदनामा रोएर बित्न लागे । अब यताको कथा यहीं थामेर मदनसेनकी विवाहिता रानी जसलाई घरमा छाडेर आएका थिए, तिनको विषयमा सुनाउँछु; ध्यान दिएर

सुन—एक दिन ती रानी आफ्नू कोठामा सुतिरहेको बेला स्वप्नमा यौटा बालक आएर भन्यो—हे रानी! तिम्रा स्वामी मदनसेन त कंचनपुरमा गएर झ्यालखान परेका छन्। यस्तो स्वप्ना देख्दा झसंग भएर उठिन् र डाँको छाडेर रुन लागिन्। तिनले रोएको शब्द सुनेर उनकी मनपरेकी सखी आएर नम्रता साथ भन्न लागी—

हे रानी! मनमा उठ्यो केको यस्तो पीर।
हाल बताई दिनहवस, राखी मनमा धीर॥

आफनी सखीको यस्ता कुरा सुनी रानीले विलापगर्दै आफ्नू विरह व्यथा सुनाइन्—

देखेर स्वप्न हुनगो मन यो अधीर।
अत्यन्त दुःखित भएँ बडि घेर पीर॥
फर्कन्छु आठ महिना बिचमा भनेर।
जाँदा भए तर फिरेनन भो अबेर॥
मान्दैन चित्त नगई प्रियलाई खोज्न।
तैयार छु महल यो घर माल त्याग्न॥
जान्छु म योगिनि बनेर घसी खरानी।
भेटेर ल्याउँछु छिटै तिनीलाइ तानी॥

रानीको स्वप्नको कुरा सुनेर सखीले भनी-स्वप्नको कुरा सत्य हुँदैन, धैर्य साथ पर्ख तिम्रा स्वामी आउँछन्।

शंका गरेछ तिमिलाइ सखी! वृथाको।
स्वप्ना हुँदैन सब सत्य कहीं कसैको॥

योे शोक गर्नुछ वृथा बुझ बात मेरो ।
क्यै टुन्न चिन्तित भई गर युक्ति जो हो ॥
संतोष राख मनमा तिमि धैर्य साथ ।
होला छिटै मिलनको भनि आश राख ॥

यसरी त्यो सखीले धेरै प्रकारले सम्झाइ-बुझाइ तर रानीको चित्त बुझेन र उही सखीलाइ भनिन्-हे सखी ! म त आफ्ना प्रियतमलाई खोज्न अवश्य जान्छु, तर तिमी यहां महलको उचित सुरक्षा गरेर बसे। यति कुरा सखी-लाई बुझाई शरीरका राजसी वस्त्र र गहना सबै फुकाली खरानी घसी योगिनीको रूप बनाई हातमा वीणा लिएर हरि-भजन गर्दै जंगलको बाटो समातिन् । मैनाले भनी—हे सुगा ! रानी त्यसरी मदनसेनलाई खोज्न जांदा अनेक नगर शहर, ग्राम एवं जंगलको बाटो नाघ्दै निकै दिनमा कंचनपुर पुगी र त्यहां गुप्तरूपले सोध-पूछ गर्दा मदनसेन कैद परेको निश्चय भएपछि मनमनै विचार गरी—अब के युक्ति गरेर आफ्ना प्राणनाथलाई यो कैदबाट छुटाऊँ ! त्यसपछि त्यस नगरका अनेक मानिसहरूसित सोधेर राजालाइ गाना-बजानाको निकै सोख छ भन्ने थाहा पाइन् र अत्यन्त खुसी लाग्यो, किनकि गान-विद्यामा उनी सबै तरहले निपुण थिइन् । सानै उमेर देखि सिकिराखेको थियो । अब रानी ठाउँ-ठाउँमा गएर गाना-बजाना गर्न लागिन् । चांडैनै तिनको गान-विद्याको चर्चा शहरभरिमा फैलियो । एक दिन

सन्ध्या समयमा रानी एउटा बगैंचामा बसेन् वीणा हातमा लिई डुलिरहेको मौकाया मनमा एक प्रकारको उत्साह आएर बगैंचाको शोभा हेर्दै, गाउन लागिन्—

न त यस्ति कुनै सखी भेटछु कहीं।
हितका गरि बात मलाई भनोस्॥
प्रियका संग भेट हुनेछ छिटै।
तिमी धैर्य धरेर बसे त भनोस्॥
पतिका कति खोज गरूँ म कहाँ।
म त थाकिसकें अब भक्ति-परोस्॥
यति भन्न पनी मनले नदिने।
जति दुःख परे पनि आई परोस्॥
अब छैन कुनै पनि व्यक्ति कहीं।
प्रिय भेटन उपाय कुनै ऊ गरोस्॥
प्रिय भेटन भनी यहि रूप लिएँ।
तर भेटन नपाई म दुःखि भएँ॥
उहि प्रीतम आइ मिलेर यहाँ।
सुख शान्ति छरोस् यहि चित्तमहाँ॥

मैनाले भनी—हे सुगा! त्यसवेला ती योगिनी (रानी) को गाना सुन्न वरपरका बाटो हिंड्ने र बगैंचा डुल्न आउनेहरू एकत्र भएर वाह, वाह, स्याबास भनेर स्यावासी दिन लागे,

अनि योगिनी फेरि अर्को गाना गाउन थालिन्—

देऊ मलाई दर्शन, हे प्राण झैं पियारा।
आऊ भनेर 'प्यारी' हे प्राणका आधारा।

बाहिरी मनले सिपाहीसित विरोध प्रकट गरे पनि भित्री इच्छा राजालाई भेट्ने त छँदै थियो। अतः हुन्छ भनेर सिपाहीको साथ लागी राजाको सभामा चुगिन्। योगिनीको रूप, भेष देखेर सबै सभासदहरू जुरुक्क उठे र योगिनीलाई मृगचर्मको आसन दिए। अनि राजा सिंहासनमा बसेपछि सबै जना आफ्आफ्ना स्थानमा बसे। अनि राजाले सोधे–हे योगिनी जी! तपाईको मूल वासस्थान वा कुटी कहाँ हो र यहाँ कता जान भनेर पाल्नु भयो। तब योगिनीले मुसुक्क हाँसेर उत्तर दिइन्—

म हूँ हे राजन्! रत्नागिरिकी वासी।
दुइ अक्षरको मन्त्र जप्तछु मैले बारहमासी॥
ध्यान म गर्छु निशिदिन प्रभुको जो छन् सुखका राशी।
मलाई-जानुन् सब जनले, ज्ञानी ब्रह्म उपासी।
म त हूँ राजन्! रत्नागिरिकी वासी।
त्यागिदिएँ धन माल खजाना, जो हुन् सुखका राशि।
घुम्छु योग लिई वन वनमा खोज्दै श्री अविनाशी॥

यो पद सुनेर राजाले भने—हे योगिनी! अब कृपा गरेर हरिगुण सुनाउनु हवस्—अनि योगिनीले भनिन्—

यो योग मलाई मन भायो।
त्यागिदिएँ धन-माल खजाना हीरा-मोती लुटाएँ।
फ्याँकी दिएँ सब वस्त्र राजसी भेष यही सुख पाएँ॥

यो योग मलाई मन भायो ।
प्रेमको फन्दा तोडि, मनमा प्रभुको आश लगाएँ ।
धैर्य र धर्म सबैकन त्यागे, यही भेषमा सुख पाएँ ।
यो योग मलाई मन भायो ।
जंगलमै जब लाग्दथ राम्रो मनमा लाग्छ खुसी ।
आत्तिन्छु दरबार महलको शोभा देखि म त्रैसी ॥
यो योग मलाई मन भायो ।

योगिनीको यो गाना सुनेर राजासहित सबै जना प्रसन्न भए । अनि राजाले भने—हे योगिनी जी, तिम्रो गाना सुनेर म प्रसन्न भएँ । अब तिमीलाई जे इच्छा छ माग म दिन्छु । राजाको बात सुनेर योगिनीले भनिन्—'राजन् ! म त्यसै केही पनि माग्दिन र मलाई केही पनि चाहिन्न तापनि हजुर आज्ञा गर्नु हुन्छ भने मलाई जे इच्छा छ सो माग्नेछु ।'

योगिनीको यति बात सुनेर राजाले भने—'म वचन दिन्छु—तिमीले जे मागे पनि नाइँ-नास्ति गर्ने छैन ।' राजाले त्यति भनेपछि मनमनै प्रसन्न भएकी योगिनीले विनयपूर्वक भनिन्—हे राजन् ! मेरा पति मदनसेन हजुरको छोरी चन्द्रकिरण प्रति आकर्षित भएर यहाँसम्म आए तर ती हजुरको कैदमा परेका छन् । अब तिनलाई मुक्ति दिई आफ्नी छोरीको तिनैसित विवाह गरिदिनु हवस् ।' राजाले योगिनीको त्यति कुरा सुनेपछि चित्त बुझ्यो र मदनसेन-

लाई झ्यालखानबाट झिकी आफ्नी छोरी चन्द्रकलासित विवाह गरिदिए ।

मैनाले भनी—हे सुगा ! त्यो मदनसेनकी रानीको प्रेम त्याग विचार गर्ने लायक छ । तर अब म मदनसेनले त्यससँग गरेको व्यवहार भन्दछु, सुन—जब मदनसेनको चन्द्रकिरणसित विवाह भयो तब आनन्द भोगमै केही दिन बितेपछि एक दिन मदनसेनको मनमा घर जाने विचार आयो र आफ्ना सासु-ससुरासित बिदा मागी प्रसस्त दाइजो लिई आफ्ना दुवै पत्नीहरू साथमा लिई त्यहाँबाट आफ्नो घर जान प्रस्थान गरे ।

मैनाले भनी—हे सुगा ! त्यस क्रमले चार दिनको बाटो काटिसकेपछि एक रात वास बसेको स्थानमा मध्य रातमा अकस्मात मदनसेनको मनमा विचार आयो—मेरा माता-पिताले चन्द्रकिरणलाई कसरी ल्यायौ ! भनी सोधे भने मैले के उत्तर दिने ? फेरि जेठी रानीले मलाई मुक्ति दिलएको कुरा भनी दिई भने त साह्रै लज्जित हुनु पर्नेछ बरू यसलाई यहीं मारि दिएर चन्द्रकिरणसित घर जानु नै असल हुनेछ । यस्ता उग्र विचार गरेर सुतिरहेकी आफ्नी जेठी रानीलाई तरबारले काटी त्यहीं खाल्डो खनेर गाडी चन्द्रकिरणलाई लिएर हिंडे । मैनाले भनी—हे सुगा ! त्यस

मदनसेनको त्यस्तो ढङ्गमानो सुन्यौ ? त्यसैले म पुरुष भन्ने सुन्दा पनि घृणा गर्दछु, मेरो शरीर काम्न थाल्दछ ।

सुगाले भन्यो—'हे मैना ! तिमीले भनेको पनि सत्य होला, तर सबै पुरुष एकनासे हुँदैनन् । अतः यसको उत्तर म दिन तयार छु, सुन !' मैनाले भनी—'हे सुगा ! हामी दुबैको सवाल-जवाबमा सारा रात बितेर उज्यालो भइसक्यो । अब दाना-पानीको व्यवस्था गरेर साँझ परेपछि म तिम्रो उत्तर सुन्नेछु । यति भनी दुबै दाना-पानी खोज्न हिंडे ।

तोता-मैनाको कथा दोस्रो भाग सकियो ॥ २ ॥

## तोता-मैनाको कथा

# तेस्रो भाग

छैठौं कथा सुगाको—

साँझ परेपछि सधैं जस्तै सुगा र मैना आएर यौटै वृक्ष-को दुइ हाँगामा बसे। अनि सुगाले भन्यो—'हे मैना! अब आफ्नू प्रश्नको उत्तर सुन।' मैनाले भनी—'हे सुगा! खुशी-सित मेरो कथाको उत्तर देऊ। म सुन्न तयार छु। फेरि म पनि कच्चा गुरुकी चेली होइन। तिमीसित सवाल-जवाब-मा हार मान्ने पनि होइन।' त्यति सुनेपछि सुगाले भन्यो—हे मैना! रत्नद्वीप नामको यौटा अत्यन्त राम्रो नगर थियो। त्यस शहरका राजा अंगध्वज थिए। तिनको रणवीर नाम-का छोरा थिए जो अत्यन्त बाठा, गुरु बृहस्पति झैं बुद्धिमान, सूर्य जस्ता तेजिला, शुक्राचार्य झैं नीतिज्ञ, र विश्वकर्मा जस्तै सर्वगुण सम्पन्न हुनाको साथै तरुण अवस्थाका, सबै शस्त्रास्त्र विद्यामा निपुण र चन्द्रमाको समान कान्ति भएका थिए। एक दिनको कुरा हो दैवयोगले वसन्त ऋतुको आग-मन देखेर आफ्ना शिकारी पशुहरू अर्थात् कुकुर, बाज र

अलिकति सेना साथमा लिई वनमा शिकार खेल्न गए। हे मैना ! मैले कथा भन्दा तिमीले 'अँ, अँ' भनेर सही थाप्दै जाऊ। नत्र तिमीले सुनेको हो कि निदाएको हो, म थाहा पाउन सक्तिन। मैनाले 'हुन्छ' भनेपछि सुगाले भन्यो—रणवीर सिंह जब एक बाक्लो जंगलमा पुगे तब संयोगले यौटा बलिष्ठ मृगमाथि तिनको नजर पर्‍यो र तत्काल आफ्नो घोडा हरिणको पछाडि दगुराए। बिचरा हरिणले राजकुमार लाई आफूतिर आउन लागेको देखी प्राण बचाउन यस्तो वेगले भाग्यो कि राजकुमारले सकेसम्म प्रयत्न गर्दा पनि त्यसलाई बाण हान्न पाएनन्। हरिण यौटा झाडीमा पसेर बेपत्ता भयो। त्यसपछि राजकुमार लाचार भएर थाकेको घोडालाई रूखमा बाँधिदिए र आफू त्यहींको एक तलाउमा हात-मुख धोई अलिकति पानी पिएर घोडाको जीन बिछाई तलाउको यौटा अलि अग्लो डुर्ज़ामा बसेर वनको सौन्दर्य हेर्न लागे—अहा ! यो जंगल कति राम्रो रहेछ—यहाँ बेला, चमेली, गुनकेसरी, कटहरी चम्पा गुलाब, जाई-जुही फुलेर सारा वनमै गम्किरहेको छ। कोकिल, मयूर, तित्रा, ढुकुर, चखेवा आदि अनेक पक्षीहरू थरि-थरिका तानले मनलाई मोहित पारिरहेका छन्। सुगाले भन्यो—हे मैना ! वनको अनुपम सौन्दर्यमा छक्क परेका ती रणवीरसिंह चारैतिर हेरिरहेका थिए। अकस्मात् त्यसै बेला बिजुली चम्के झैं

सामुन्नेबाट तरुणीहरूको एक हुल आउन लागेको देखे । ती युवतीहरूको माझमा ताराहरूको बीच चन्द्रमा झैं सुन्दरी युवती आफ्नू सौन्दर्यले चारै दिशा प्रकाशित पार्दै कामदेवको स्त्री रतिको समान आफ्ना सखीहरूका साथ मदले मस्त भएको हात्तीको चालले आउन लागेकी थिई । राजकुमारले जब त्यसलाई देखे तब मनमनै विचार गर्न तिनलाई कर लाग्यो—होइन, यी कुनै राजाकी कन्या हुन् कि, हे प्रभो ! यो के जादू झैं देखिरहेको छु यस्तो घनघोर वनमा यस्ती कोमलाङ्गी सुन्दरी कहाँबाट आइन् ? यी स्वर्गकी अप्सराहरूमा प्रधान उर्वशी, रम्भा, तिलोत्तमा, मेनका, सुकेशी र मंजुघोषा मध्ये कुनै एक हुन् । जो आफ्नो देहको कान्तिले चारै दिशा प्रकाशित पार्दै यतैतिर आइरहेकी छन् । अब यी सुन्दरीको सबै हाल नजानी म यहाँबाट जान पनि अनुचित ठानिरहेको छु । यति विचार गर्दै राजकुमार त्यहीं बसिरहे । त्यसै बेला सबै युवतीहरू त्यस तलाउको किनारमा आफाफ्ना लुगा फुकाली अर्को सारी लगाउन थाले । संयोगले ती शशिमुखीले पनि आफ्नो पोशाक फुकालेर सारी फेर्न लाग्दा हावाले तिनको शरीरको केही भाग नांगो पारिदियो । त्यस बेला आकाशमा बिजुली चम्के झैं राजकुमारलाई अनुभव भयो । त्यस प्रकारले सुन्दरीको अंगको शोभा देखेर राजकुमार मूर्च्छित झैं भए तर धैर्यसाथ आफूलाई होशमा

राखेर मनको वेग रोकी विचार गर्न थाले—यी कामिनी र अन्य युवतीहरू तथा राम्रो तलाऊ; यो उपवन कुनै मन्त्र-तन्त्रले अथवा जादूको प्रभावले तयार पारिएको त होइन ? अथवा म अहिले निद्रामै त छैन; कि स्वप्नलोकमै त घुमिरहेको छैन ! यस्तो राम्री नारी त मैले आजन्मम कहिल्यै देख्नपाएकै थिइन। इत्यादि विचार गर्दै मौकाको प्रतीक्षा गर्दै बसिरहे। युवतीहरू जलमा पसेर स्नान गर्न लागे। तिनको निश्छलता, पवित्रता, कोमलता र मन्द-मन्द मुस्कान सहित भाव-भङ्गिमा देखेर ती मोहित भइरहेका थिए।

मेरो चित्त लगिन् खिचेर बलले, भन्दैछ मेरो मन !
मनको भाव हुँदैछ व्याकुल बढी, यस्तो भएको किन ?

सुगाले भन्यो—हे मैना ! यता राजपुत्रको मनमा मोहको आगो दन्कियो भने उता राजकुमारी पनि रणवीरसिंहलाई देख्नासाथ मन-प्राणले मोहित् भइन् तापनि सखीहरूको डर र लाजले केही पनि बोल्न सकिनन् र आफ्नो भित्री मनमा उनै रणवीर सिंहको रूपलाई थन्क्याइन् अनि त्यो रूप फेरि बाहिर निस्कन नपाओस भनी आँखा चिम्लिइन्। उता राजकुमारीका सखीहरूले तिनको भाव-भङ्गिमा देखेर यिनी यो राजकुमारप्रति आसक्त भइछन् भन्ने जानी यौटी बाठी सखीले भनी—

लुधेका दुइका नेत्र लुकाउन् जति नै गरी।
छिप्तैन त्यो गर्छ चोट मौकामा बुझ रासरी॥

अर्की सखीले भनी—हे राजकुमारी ! धैर्य धारण गरी आफ्ना मनलाई रोक्नुहोस। यति विकल हुन हुँदैन। यसै विषयमा कुनै कविले भनेका छन्—

आँखाको धर्म यही हो बुझ? जुध्दछ सौकामा।
त्यसपछि सारा बगेर जान्छ इज्जत पानीमा।

सखीहरूका त्यस्ता कुरा सुनी नक्कली रीस देखाउँदै तिनले झपारिन्—ए सखी हो! आज के तिमीहरूले मलाई पूरा सिल्ली भइसकें भन्ने ठानेका छौ? त्यो मानिस को हो? कताबाट आयो? कहाँ जान्छ, के गर्दछ? त्यसलाई त्र के भनूँ! त्यो त बाटो लागेको यौटा परदेशी हो। अब त मलाई तिमीहरूलाई दण्डित गर्न मन लागिरहेको छ। किनकि तिमीहरूले आज मलाई निकै घोच-पेंच गर्‍यौ। यति भनेर हाँस्तै स्नान गरिसकी तलाउबाट बाहिर निस्की पोशाक फेर्न लागिन्। त्यस बखत अज्ञात राजपुत्रको विरहमा व्याकुल भएकी ती राजपुत्रीलाई उल्टै गहना र उल्टै वस्त्र लगाएको पनि ज्ञान हुन सकेन। त्यो देखी सखीहरूले गहना र वस्त्र मिलाइदिए। ती विकल राजपुत्रीलाई त्यस बखत रणवीर सिंह बाहेक अरू केही वा कोही पनि मन-परिरहेको थिएन। तिनको मनको विकलता झन्-झन् बढिरहेको थियो। कसैले भनेको पनि छ—

विरह वेदना झैं अरू छैनन् दर्द कुनै।
खानू, बस्नू लिन्छ हरी, बर्षन्छन् दुइ नैन॥

राजकुमारीको त्यस्तो परिस्थिति देखेर सखीहरूले बबैका माझमा उनलाई राखी लैजान लागे। तब तिनलाई जान लागेको देखेर रणवीरसिंह व्याकुल भई उनलाई सुनाएर भन्न लागे——

कठिन प्रीतिको रीति हो, यो लागे यदि क्यै गरी।
मनपर्दैन क्यै पनी भोक प्यास सब मारी॥

रणवीरसिंहको यस्ता कुरा सुनी राजकुमारीले यौटा फूल लिई पहिले कानमा लगाइन् अनि छातीमा टाँसिन् र अन्त्यमा खुट्टाले थिचेर फ्याँकिदिइन्। अनि आफ्नो बाटो लागिन्। घर पुगेर पनि रणवीरसिंहको विरहमा तिनले खानु, पिउनु, सुत्नु, बस्नु सबै त्यागि दिइन् र दिन-रात आफ्नै कोठामा बसेर झोक्रिई रहन्थिन्। तिनको चाला देखेर सखीहरू जम्मा भई सम्झाउन लागे——हे राजकुमारी! हजुर यस्ती बुद्धिमान भएर पनि यौटा अपरिचित परदेशीमा आसक्त हुनु यो हजुरको निम्ति शोभाको कुरा होइन। सखीका यस्ता कुरा सुनी राजकुमारीले भनिन्——

जसको तनमा लाग्दछ यस्तो घाऊ तीखो।
त्यसले नै दुख जान्दछ, अरु सब जान्ला को॥

हे सखी हो! अब मलाई त्यो परदेशीलाई देख्न नपाए सम्म मनमा शान्ति हुँदैन। जुन दिन मैले त्यसलाई देखें, त्यही दिनदेखि मेरो हृदयमा परदेशीको स्नेहले डेरा जमाइ-

सकेको छ । अब धपाए पनि त्यो मनबाट निस्कन्न । त्यसको चञ्चल मृगको झैं हेराइ, मन्द-हास्य, मोतीका दाना जस्ता दाँत, औंठी झै बटारिएका केश-राशि र उत्तम राजपूत जस्तै भेष यी सबैले मेरो कलेजा छेडेर यस्तो घर बनाइसके कि अब म त्यसलाई बिर्सन खोजे पनि सक्तिन । हे सखी हो ! अब मेरो प्राण रक्षा गर्न चाहन्छौ भने जसरी भए पनि त्यस परदेशीसित भेट हुने उपाय गर, नभए अब मेरो जीवन रक्षा हुन कठिन मात्र होइन कि असम्भव छ । यति भनि सकेर लामो सास फेर्दै फेरि भनिन्—

प्यारा ! प्रेम लगाइ नयाँ, गयौ कता त्यजि हाई ।
प्यासा छन् दुई नयन यी, दर्शन देऊ मलाई ॥

हे मैना ! यता रणवीरसिंहको वियोगमा राजकुमारीको त्यस्तो हालत थियो, उता राजकुमारीको वियोगमा रणवीरसिंहको यस्तो स्थिति थियो कि बौलाहा झैं कहिले दगुर्ने, रुने र भूँमा लड्ने, फेरि उठ्ने गरेर 'आह ! हरे !' भन्दै छिन-छिनमा भन्दथे—

नयन-बाण हानी प्रिये, गयौ कहां तिमिनै भन ।
सम्झन्छु तिमिलाइ नै, बौलाहा झैं छिन्-छिन ॥

यस्तै अनेक थरिका विलाप गर्दै रणवीरसिंह व्याकुल भएर त्यही वनमा डुल्न लागे । संयोगले तिनका मित्र खोज्दै यहीं आइपुगे, तर आफ्नू मित्रको त्यो चाला देखेर छक

गरेका चन्द्रदत्तले सोधे–'हे मित्र ! हजुरको यो के हालत हो ? किन बौलाहा जस्तै चाला गरेको ? मित्रको त्यस्तो कुरा सुनी राजकुमारले लामो सास फेरेर भने—

हानी बाण विरहको, हे प्यारी ! तिमि छौ कहाँ ।
देखाऊ शशि झैं मुख, आई झट्ट यहाँ ॥

राजकुमार रणवीरको त्यस्तो कुरा सुनी मित्रले भने—'हे राजपुत्र ! आज हजुरलाई के भयो र यस्तो प्रलाप गरेको ? यसरी गर्दा त बौलाहा हुन पनि बेर लाग्दैन ।' मित्रको प्रश्नको उत्तरमा राजकुमारले भने—

मन्को शान्ति र धैर्य आश जति हो, सल्है बिलाया सब ।
आशा क्षीण भयो निराश मनमा, बढ्दो छ मेरो अब ॥
चुल्ठो नागिनि झैं सुधासरि मिठो, वाणी सुनाई कन ।
देखाई मुख चन्द्र झैं हिंडिगइन्, मेरो लिई जीवन ॥

घाँटी शंख समान, चाल गजको, हे मित्र, तिन्को थियो ।
हेर्दी चंचल नेत्रले, हृदयमा, त्यो वाण झैं गाढियो ॥
तिन्को वर्णन गर्न रूप गुणको, मैले कहाँ सक्छु ।
चाँडो भेट्न सकीन तिन्कन भने, यो प्राण नै त्याग्दछु ॥

चन्द्रदत्तले आफ्ना मित्रको त्यस्तो चाला देखेर मन-मनै यी कुनै सुन्दरीको मोह-जालमा उल्झिएछन् भन्ने स्पष्ट बुझे पछि साहस दिने विचारले भने—हे मित्र ! हजुर किन यसरी हताश हुनुभयो ? पहिले मलाई सबै कुरा विस्तार-पूर्वक सुनाउनोस्, र मनको व्याकुलता एवं निराशा त्यागिदिनोस, अनि म सक्दो उपाय गर्नेछु ।

मित्रको त्यस्तो सहानुभूतिको कुरा सुनी राजपुत्रले केही धैर्य धरेर, मनको व्यग्रता रोकी भने—हे मित्र ! यौटी अत्यन्त रूपवती राजकुमारी आफ्नो सखीहरूका साथ स्नान गर्न आएकी थिइन् । तिनको रूप-गुण र यौवनको यथार्थ वर्णन गर्ने शक्ति ममा छैन, तापनि सुन—

बेलाका कोपिलाको मग-मग छुटने घाँटिमा पुष्प माला ।
तिन्का ती हातमा ता चुरिहरु सुनका टल्कने स्वच्छ बाला ॥
गाला छाला मिलेका कमलसरि नयन्, केश झन् चिल्न काला ।
चाला माला बढीया अलिकति घुमटो दी बढेकी दुशाला ॥
धान्का बाला नुहेझैं पुरुष नजरमा न्यूरने भारि चाला ।
ख्याला जाला भने झैं हुन पनि नदिने मूखमा छन् मशाला ॥
भाला जस्ता कठाक्षै नजर गरिदिंदा घोचिने मित्र छाला ।
यस्ती चौपट्ट राम्री तरुणिसित यहीं भेटमो येसपाला ॥

'हे मित्र ! जब देखि तिन्का र मेरा चार नजर भए, त्यसै बेलादेखि मलाई यो व्याकुलताले छोप्यो । मलाई खान-पुन, सुत्न-बस्न केही पनि मन लाग्दैन । हरवखत तिनैलाई सम्झि रहन्छु । अब तिमी जसरी भए पनि ती सुन्दरी मलाई प्राप्त हुने उपाय गर । नत्र मेरो जीवन-रक्षा हुन सक्तैन ।' आफ्ना मित्रको त्यस्ता कुरा सुनी चन्द्रदत्तले भने—लोग्ने मानिसले यस्तो अधीर भएर काम चल्दैन । धैर्य धारण गरेर उपाय विचार गर्नुपर्दछ । यस विषयमा कसैले भनेका छन्—

विना विचारी गर्छ जो, बस्ला त्यो पछुतायी।
आफ्नू काम बिगारि सबै, होला खूब हँसाई ॥

हे मित्र ! तिमी जस्तै बुद्धिमान् व्यक्तिले यस्ती स्त्रीमा यति वर्ता लोभिनु असल काम होइन । राजा भरथरीले आफ्नू सारा राज्य, र सम्पत्ति त्यागेर योग धारण गरेपछि भनेका छन्---

रसमा जस्तै रोषमा जो होला मस रूप।
बोल्ने वाणी खूब मिठो, स्त्री हुन् बन्धन रूप ॥

'हे मित्र ! स्त्री-रूप बन्धनमा-बाठा, गुणी र विद्वान् व्यक्ति कहिले पनि अल्झन्नन् ! समस्त पुरुषका लागि यदि कुनै ठूलो र बलियो बन्धन छ भने त्यो स्त्री नै हुन् ।' मित्रका वचन सुनेर राजपुत्रले भने---

कंकण नूपुर किंकिणी, मृग-नयनीका नैन।
को नपर्ने वशमा, सुन्दा अमृत बैन ॥

राजकुमारका यस्ता वचन सुनेर तिनका मित्रले भने--- हजुरको कथन सत्य हो, तर जो अनुभवी र पण्डित छन् तिनी-हरू नारीका कटाक्ष-रूपी नेत्रका बाणदेखि परै रहन खोज्दछन्- भनेको पनि छ---

तीन काल अरु त्रैलोक्यमा नारी मोहन रूप।
हुन् दाता दुखका सदा, जान्नू सोची खूप ॥

मित्रको उपदेश सुनी राजपुत्रले भने---केही अंशमा तिम्रो कथन पनि सत्य होला, तर यस संसारमा नारी बाहेक सुख र आनन्द दिने अन्य केही वस्तु छैन । जुन व्यक्तिले यस तुच्छ

संसारमा जन्म लिएर स्त्रीरूपी रत्नको मूल्य जानेन त्यसको जीवन व्यर्थ हो। यसैले भनेको पनि छ—

आज्ञाले गुरुको गई बस्नू गैकन वन।
की भोग्नू स्त्री-रत्नको, रूप सुधा यौवन॥

अर्को सुन—

की भोग्नू स्त्रीरत्न, की गर्नू वनको वास।
दोटा छन् संसारमा, पुरुष जातिका आश॥

राजकुमारको त्यस्तो उत्तर सुनेर तिनका मित्रले अर्को उदाहरण दिई भने—हे मित्र! स्त्रीरूपी रत्न त केवल मूर्खहरूले सेवन गर्ने वस्तु हो, किनकि पण्डितहरूले त स्त्रीका विचित्र चरित्र र विभिन्न दोषको राम्ररी निन्दा गरेका छन्—यसै विषयमा कोही कविको कथन छ—

सान्है क्षीण कटी, उरोज दुइटै, हुन् मेरुका टाकुरा।
भौं बांगा धनुझैं, मुहार शशिझैं, छन् मोह पार्ने पुरा॥
मत्ता हात्ति समान चाल छ सफा, संसार लोभ्याउने।
त्यस्ती स्त्रीकन देखि पंडित गुणी, छन् मोहमा गाडिने॥
त्यस्ती दीन मलीन हीन मतिकी, स्त्री रत्नलाई पनि।
हुन्छन् मोहित विज्ञ व्यक्ति तिमिझैं, क्वै मूर्खजस्ता बनी॥
जान्नेले जब चिन्दछन् बखतमा हुन् मोहरूपा भनी।
जान्छन् ती घरबार त्यागि, गुरुको, आज्ञा र योगी बनी॥

आफ्ना मित्रको यस्ता कुरा सुनी राजकुमार रणवीरसिंहले उत्तर दिए—

प्रेमको भेलमा मैले, हाम्फाले र बगें पनि।
यसबाट पनि क्यै युक्ति, गरलौ मित्र हो भनी ॥
जे होला पछि त्यै होला, चिन्ता गर्दिन क्यै पनि।
कि त्याग्छु प्राण नै आफ्नू, कि बस्छु उसकै बनी ॥

रणवीरसिंहका मित्र चन्द्रदत्तले त्यति कुरा सुनेपछि राजकुमार ती अज्ञात सुन्दरीको प्रेममा गाढिई जकडिई सकेछन् भन्ने बुझी सकेपछि सम्झाए-बुझाए तापनि मानेनन्। यदि यस्तो संकट समयमा म यसै छाडेर जाऊँ भने यी कता जाने हुन् र के गर्ने हुन् भन्ने ठेगान छैन इत्यादि विचार गरेर फेरि सोधे—'हे मित्र ! जुन सुन्दरीको रूप र यौवनमा तिमी यसरी बौलाहा जस्ता भइरहेका छौ, तिनको नाम, निवास स्थान, पिता, वंश केही थाहा भए बताऊ। अथवा यहाँबाट जाने बखतमा केही भनिन् कि कुनै इशारा संकेत गरेकी भए बताऊ, त्यसैको आधारमा म तिमी दुबैको मिलन हुने कुनै उपाय गर्न तयार छु। फेरि तिम्रो एकहरो माया हो कि ती सुन्दरी पनि तिमीप्रति आसक्त छन्, यी सबै कुरा भन।'

राजकुमारले भने—हे मित्र ! मेरो सुख चैन तथा जीवन हरण गर्ने सुन्दरीले कुरा केही पनि गरिनन्, तर हिड्ने बेलामा यौटा फूल लिएर पहिले कानमा लगाइन्, त्यसपछि हृदयमा टाँसेर खुट्टामा राखी आफ्ना नयनरूपी बाणले मेरो चित्त छिया-छिया पार्ने अज्ञात स्थानतिर गइन्। हाय ! अब म के गरूँ र तिनो बिना प्राण कसरी राखूँ ?

चन्द्रवदनि मृगलोचनी, काला लामा केश।
तिनके खातिरमा त्यजैं, सारा बन्धु स्वदेश॥
भेटिन्छिन कसरी कहाँ बढ्दछ मनको पीर।
नयन-बाण लागे पछि, बरुलाको बनि धीर॥

यति सुनेपछि चन्द्रदत्तले भने--कुमार! अब निराश हुन काम छैन। ती सुन्दरीका संकेतको अर्थ मैले थाहा पाएँ। उनले फूल कानमा लगाएको अर्थ हो, ती कर्नाटक देशका राजाकी कन्या हुन् र छातीमा टाँसेको अर्थ हो---ती पनि मन-प्राणले तिमीप्रति मोहित छन् र पाउमा लगाएको अर्थ हो---तिनको नाम पद्मावती रहेछ। हे मित्र! यति सम्म थाहा पाएपछि अब तिनीसित भेट हुनमा कुनै प्रकारको सन्देह रहेन। यति कुरा गरेर दुवै साथी आफ्ना सेनाहरू राज्यमा पठाई आफ्आफ्ना घोडामा चढेर त्यहाँबाट प्रस्थान गरे। बाटोमा राजकुमारलाई घरि-घरि उनैको सम्झना भइरहेर आत्तिइरहेका देखी चन्द्रदत्त अनेक थरिका सान्त्वना दिएर गइरहेका थिए। केही दिन पछि दुवै जना यौटा सघन वनमा पुगेर त्यस वनको शोभा हेर्दै राजकुमार बौलाहा जस्ता भई गीत गाउँदै सारा रात जागै रहे। प्रातःकाल भएपछि फेरि दुवै जना आफ्आफ्ना घोडा चढी त्यहाँबाट हिंडे। एक दुइ दिन पछि कर्नाटक नगरमा पुगे। अनि

राजपुत्रले सोधे—हे मित्र ! अब कहाँ विश्राम गर्ने विचार छ ? तब चन्द्रदत्तले उत्तर दिए—राजकुमार ! अझ अगाडि बढौं, कुनै उत्तम स्थान हेरेर त्यहीं विश्राम गरौंला ! यसरी कुरा गर्दै दुवै जना गइरहेका थिए कि सामुन्ने योटा अत्यन्त सुन्दर बगैंचा देखियो। त्यस बगैंचाको सौन्दर्य देखेर दुवै जना त्यहीं पसे। सायंकाल हुनाले त्यहाँकी मालिनी आई र दुवै जनालाई देखी छक्क परेर भनी—'ए, तिमीहरू को हौ ? यो पद्मावतीको जनाना बागमा के गर्न आएका ? आफ्नै इच्छा भए तुरुन्त यहाँबाट जाओ, नभए सिपाही डाकेर छाला तर्क लाउनेछु।' त्यति सुन्नासाथ चन्द्रदत्तले पाँच असर्फी त्यसका हातमा राखिदिएर भने—हे मालिनी ! जसरी भए पनि हामीलाई यहीं बस्न देऊ। अनि त्यो मालिनीले विचार गरी—यी कुनै राजकुमार रहेछन्, कुनै विपत्ति परेर यहाँ आएछन्, बरु इनलाई घरै लगेर राखे हानि छैन—यति विचार गरेर आफ्नु घर लगी र योटा राम्रो घरमा बस्न दिई र तिनका घोडा पनि उचित स्थानमा राख्ने व्यवस्था मिलाई दिई।

यता राजकुमार पद्मावतीको विरहमा व्याकुल थिए। उता पद्मावती पनि राजकुमारका विरहमा खान-पिन छाडेर दिन-रात रोइरहन्थिन्। त्यो देखेर सखीहरूले भने—हे राजकुमारी ! हजुरलाई के भयो ? किन यसरी रोइरहनु

हुन्छ । यो वसन्त ऋतुको उत्तम समयमा श्रृङ्गार गरी आनन्द मनाउनु हवस् । सखीहरूका यस्ता कुरा सुनी राजकुमारी भन्न लागिन्—

जुन दिन जुध्न गए दुवै नयन यी, त्यो रूपका साथमा ।
त्यै दिन देखि सबै गए सुखहरू, जो जो थिए पासमा ।
यौटै काम छ शेष व्याकुल भई, सन्ताप मान्दै रूने ।
बाटो देखिदिन है सखी, म अहिले कल्याण आफ्नू हुने ॥

राजकुमारीको यस्ता विरह वचन सुनेर सखीहरू सान्त्वना दिंदै भन्न लागे—'हे सखी ! हजुर यस्ती बुद्धिमति भएर पनि त्यो अपरिचित परदेशीमा मोहित भई व्यर्थको कष्ट भोग्नु हुन्छ । त्यो कहाँबाट आएको, को थियो र कहाँ गयो केही पत्ता छैन । त्यस्तो अज्ञात व्यक्तिसित प्रेम गर्नु मूर्खता हो । अब हाम्रो कुरा मानेर परदेशीलाई बिर्सिदिनुस्, यसैमा कल्याण छ ।' सखीहरूका यस्ता कुरा सुनी राजकुमारी भनिन्—

विरह अग्नि मनमा बस्यो बढ्यो हृदयमा पीर ।
युक्ति छैन क्यै भेट हुने व्याकुल हुन्छ शरीर ॥

राजकुमारीको त्यस्ता कुरा सुनी—इनीलाई हामीले बुझाउन सकेनौं, अब इनकी मातालाई यो कुरा नसुनाए हामी माथि आपत्ति आउन सक्दछ—यस्तो विचार गरी केटीहरूले महारानी कहाँ गएर भने—हे महारानी ! केही दिन भयो राजकुमारीको हालत ठीक छैन । खानु, सुत्नु,

बोल्नु, खेल्नु सबै छाडेर रोइरहनु हुन्छ । केटीहरूका कुरा सुनेर महारानी छोरीको महलमा आई भन्न लागिन्—मैयाँ, तिम्रो के चाला हो ? यस्ता प्रकारले व्याकुल हुने कारण के हो ? माताको प्रश्न सुनी मैयाँले भनिन्—

मदन अग्नि मनमा बल्यो, राखूँ, कसरी धीर ।
कयौ गर्दा पनि जान्न यो, मनको पापी पीर ॥

छोरीको यस्ता कुरा सुनी रानीले भनिन्—"मैयाँ ! तिमी यस्ती बाठी भएर पनि के बौलाही जस्ता कुरा गरेकी तिम्रो शरीर सुकिरहेछ, मुख पहेलो भइसक्यो । अब आफ्नू मनको कुरा मलाई नढाँटि भन ।" त्यति सुनी मैयाँ ले भनिन् हे माता ! म आफ्नू विरहको कथा कसरी हजुरलाई सुनाऊँ—

उन्को जान्दिन हाल कयै कसरी काटछन् रैन ।
आफ्नू जान्दछु राम्ररी: साह्रै छु बेचैन ॥
देख्न नपाई प्रिय कन, व्याकुलता बर्ता भयो ।
पाउँ हलाहल खान छिटै, त्यागछु प्राण म यो ॥

छोरीको त्यस्तो विरहयुक्त कुरा सुनेर रानीले भनिन्—ए केटी हो ! यसको गिदीमा गर्मी बर्ता भएछ, त्यसैले लज्जा त्यागेर बोलिरहेकी छ । वैद्यराजलाई डाक्न पठाई औषधि गराओ । आज्ञा पाउनासाथ केटी गई र ढोकेलाई भनेर वैद्य डाक्न पठाई । ढोकेले तुरुन्त गएर वैद्यराजलाई हाजिर गरायो । उनले मैयाँको नाड़ी हेरे । अनि मैयाँ ले भनिन्—

नाडी के छाम्छौ तिमी, फोका उठ्ला हात।
वैद्य जाऊ घर फिरी, गर्दिन धेरै बात॥
लागी बाण नयनको, विष झार्ने छिनमा।
छैनन् यस्ता वैद्य कुनै, विष झार्ने छिनमा॥

मैयाँका कुरा सुनेर इनी कुनै पुरुषमा मोहित भएकी रहिछन् भन्ने वैद्यले पनि जाने र उनकी मातालाई भने--

नयन लडे अरु विरह बढ्यो, लाग्यो यसकै शोक।
रोग जान्छ प्रीतम मिले, बन्छ देह अशोक॥

रानीसाहेब ! मैयाँलाई कुनै रोग छैन। प्रेम-रोग लागेछ उनको प्रेमीसित भेट नभएसम्म रोग जाँदैन। बरू छिटै इनीहरूको विवाह गर्ने उपाय गरिदिए असल हुनेछ। यति भनेर वैद्य गए, रानी पनि आफ्नू महलमा गइन् र एक दिन मौका पारेर राजासित भनिन्--'स्वामी ! अब छोरी विवाह योग्य भई। कुनै दिन त्यसले सरोवरमा स्नान गर्न जाँदा यौटा कोही राजकुमार देखेछ, त्यसै दिनदेखि उसमा आसक्त भएर खानु-पिउनु सबै त्यागी उसैको विरहमा रोइरहन्छे।' रानीको कुरा सुनी राजाले भने--'प्रिये ! तिमीले मैयाँलाई तिम्रो विवाह त्यसै राजकुमारसित गरिछिन्छु भन। बढेकी छोरीको विवाह गर्नै पर्दछ। अतः उसले रोजेको वरसित विवाह गरिदिए असल हुन्छ। त्यसपछि रानी गएर मैयाँलाई भनिन्--मैयाँ ! तिमीले रोजेको व्यक्तिसित तिम्रो विवाह गरिदिन राजाले आज्ञा भएको छ। अब त्यो

कुन देशको राजकुमार हो र नाम के हो, सबै बताऊ। म उसलाई खोज्न पठाउँछु। पद्मावतीले उत्तर दिइन्—माता! त्यसको नाम पत्ता मलाई केही पनि थाहा छैन।

चन्द्र समान स्वरूपका उनले नेत्र तरी।
लुक्न गए आफू कहाँ, मारी नेत्र कटारी॥

हे सुगा! उनलाई देखेर मेरो मात्र यस्तो गति भइरहेछ नठान्नु होला। उसको स्थिति समन्दा पनि नजाति हुन सक्दछ। हामीले स्नान गरी फर्कन लाग्दा ऊ मेरो विरहमा बौलाहा जस्तै डुल्न लागेको मैले देखेकी हुँ। फेरि प्रेम एकहरो कदापि हुन सक्तैन।

छोरीका त्यस्ता कुरा सुनी रानीले राजालाई सबै सुनाइन्। अनि जुन मानिसको नाम पता थाहा छैन, त्यसको पता कसरी लगाउने भनी कुराको राजालाई चिन्ता पर्‍यो। आमा बाबु छोरीको विषयमा चिन्तित रहन लागे। छोरी आफ्ना प्रियतमका विरहमा प्रतिदिन दुब्लाउँदै जान लागिन्।

उता आफ्ना मित्रसित मालिनीको घरमा बसेका राजकुमारको हाल भन्दछु—एक दिन मालिनीले फूलको राम्रो माला उनेर लैजान लागेको देखेर चन्द्रदत्तले सोधे—मालिनी! तिमी यो माला कसका निम्ति लगिरहेकी छौ? उनले—'यो

मैयाँ पद्मावती कुनै राजकुमारको विरहमा व्याकुल रहन्छिन्, उनैलाई खुशी पार्न सधैं जान्छु ।' त्यति सुनेपछि उनले पाँच अशर्फी हातमा हालिदिए र भने—म यौटा चिठी दिन्छु ; त्यो मैयांके हातमा दिनू । मालिनीले मंजूर गरेपछि स्वयं राजकुमारले यौटा पत्र लेखे—

स्वस्ति श्री प्रियलाई आशिष सदा, लिन्छु म हे मानिनी ।
तिम्रा नेत्र कटाक्षले हुनगएँ, दुःखी म सारै अनि ॥
हाम्रो भेट हुँदा सरोवर महाँ, स्नानादि पूरा गरी ।
शृङ्गारी तनमा समस्त गहना, हेर्दी भयौ जुन् घरी ॥
लागी नेत्र कटाक्ष घायल भएँ, सान्है नराम्रो गरी ।
मेरो स्नेह रहेन केहि मनमा, सान्है भयौ निष्ठुरी ॥
जस्तै छटपट गर्छ मत्स्य जलको, झिक्ता हुंदी बाहिर ।
मेरो हाल छ यै, अघोर निशि झैं रहछु म चारैतिर ॥
भेरैं देशहरू डुलें तिमिकनै, भेट्ताउने आशले ।
तिम्रो केहि दया भए अब छिटै, भेटनेछ यो दासले ॥
आएको अहिले म छु, प्रिय ! यहाँ तिम्रो बगैंचा महाँ ।
आशा राख्छु ठुलो म भेट हुनको, आफ्नो दुःखी मन्महाँ ॥
तिम्रा चंचल नेत्र छन् हृदयमा, तर्वार झैं गाड्नि ।
त्यस्को औषधि छैन क्यै तिमिबिना, छु आशमा पर्खने ॥
जे माग्छयौ तिमिले प्रिये ! उचित त्यै आनन्द मानी गर ।
देऊ दर्शन कामकी रति सरी, त्यो रूपको सुन्दर ॥

यो पत्र लेखेर मालिनीलाई दिए । उसले माला र चिठी लगेर मैयांलाई दिई । त्यो पत्र लिएर पढेपछि मैयांको खुशीको ठेगान रहेन ; अनि हर्षमग्न भन्न लागिन्—

पाएर पत्र मन यो हुनगो प्रसन्न।
शान्ती भयो हृदयमा मिलि वल्ल चैन ॥
उर्लन्ठ यो मुद्दु मिलि मनको मुराद।
जाने भए अब समस्त व्यथा फसाद ॥

हर्षको वेगमा मैयाँले भनेको सुनेर सखीहरूले सोधे——हे मैयां! यसमा के लेखेको रहेछ र यति प्रसन्न हुनुभयो! अनि मैयांले उत्तर दिइन——

यो पत्र हो, हृदयका धनले पठाए।
मेरो वियोग उनिले सहजै धपाए॥
खोज्दै मलाइ अहिले तिनि बागमा छन्।
डाकूँ कि जाउँ यहि भन्छ भएर दोमन ॥

हे सखी हो! जुन प्रियतमको वियोगमा मेरो यो अति भइरहेको थियो उनै आएर हाम्रो बगैंचामा बसेका छन्। त्यसै बीचमा मालिनीले भनी—मैयां! राजकुमारले यसको उत्तर मागेका छन्। यति भुन्ना-साथ मसी-कलम मगाई पत्र लेखिन् र इनाम समेत मालिनीलाई दिएर पठाइन्—मैयांको उत्तर—मेरा सबैभन्दा प्रिय!

प्याराका पदमा प्रणाम खुसिले, स्वीकार गर्नू हवस्।
पाई पत्र हजूरको खुशि भएँ, यो बात जानी लिनोस ॥
धेरै कष्ट सहेर यो बखतमा, जो बक्सियो दर्शन।
त्यस्ले खूसि भयो सबै तरहले, सन्तापिएको मन ॥

—हजुरकी दासी

त्यो पत्र लिएर मालिनी बगैंचामा गई र राजकुमारलाई दिई। त्यो पत्र पढी कुमार प्रसन्न भए। त्यो समाचार मैयांकी आमाकहां पुग्यो र उनले राजालाई सुनाइन्। अति प्रसन्न भएका राजाले तत्काल मानिस पठाई राजकुमारलाई डाकी काइदा साथ सबै तयारी गरी राजकुमारी पद्मावती र राजकुमारको विवाह गरिदिए। त्यसपछि दुबै प्रेमीका मनको इच्छा पूर्ण भयो। प्रति दिन सुख भोग गरेर आनन्दलेदिन बिताउनलागे। राजकुमार प्रतिदिन एक घटक बेलुकातिर आफ्ना मित्र चन्द्रदत्तलाई भेटन जान्थे, त्यति एक छिनको वियोग पनि सहन नसकेर राजकुमारीले एक दिन सोधिन् स्वामी! हजुर दिनहुँ कहां जानुहुन्छ हजुरको वियोग म सहन तयार छैन। भन्न हुने भए दासी-लाई भन्नुहवस्। आफ्नी प्रियतमाको विनम्र प्रार्थना सुनेर रणबीर सिंहले भने—सुन्दरी! तिमीसित लुकाउने कुरा मसित केही पनि छैन। मसँग ैं मेरो एक मित्र यहां आएका छन्। तिनको नाम चन्द्रदत्त हो। उनको म प्रति अगाध स्नेह छ। त्यसैले उनी घर-द्वार छाडेर मसँग आएका हुन्। अतः म दिनको एक पल्ट उनैलाई भेट्न जान्छु। पतिको त्यति कुरा सुनेपछि मैयांले मनमनै विचार गरिन् स्वामीको त्यो मित्र यहां रहेसम्म पूर्णरूपले मतिर चित्त लाग्ने छैन। अतः कुनै उपायले त्यसलाई मार्न पाए स्वामीको आउन

जाने बाटो नै बन्द हुने थियो र मैले एकैछिनको भए पनि स्वामीको वियोग सहनु पर्ने थिएन । यस्तो सोचेर भनिन् — स्वामी ! हजुर जस्तो कठोर व्यक्ति संसारमा खोजे पनि पाउन कठिन छ किनकि हजुरको उपकार र सहायता गर्ने, फेरि उनैको युक्ति-बुद्धिले आज हामी दुवैको मिलन भयो— त्यस्ता मित्रलाई एक्लै बगैंचामा छोडेर आफू यहाँ मसित सुख-भोग गर्दै हुनुहुन्छ । अतः भोलि तिनलाई यहीं डाकेर भोजन गराउनु हवस् । राजकुमारले मैयाँको सल्लाह स्वीकार गरी मित्रलाई भने—हे चन्द्रदत्त ! तिम्री भाउजुले तिमीलाई भोजन गराउन मन गरेकी हुनाले उनको निम्ता स्वीकार गरे र भोलि उहीं भोजन गर्न आनुपर्छ । चन्द्रदत्तले स्वीकार गरे । मैयाँले भोलिपल्ट विष मिलाएर भोजन तयार गराइन् । अनि समयमा मित्र पनि आए । भोजन गरेर फेरि बगैंचामै गए । राति विषको प्रभावले तिनी सुतेको सुत्यै भए । पद्मावतीले मालिनीलाई आफ्नू मतमा मिलाएर आज चन्द्रदत्तलाई विष खान दिएकी छु, राती त्यो मरिसकेपछि तैंले राजकुमारलि हजुरका मित्र सर्पले टोकेर मरे भन्ने समाचार दिनू । यो कुरा कतै खुस्कन नपाओस् । राति भएपछि उता चन्द्रदत्त विषले बेहोश भए । यता मालिनी आएर राजकुमारलाई भनी— हजुरका मित्र सर्पले टोकेर बेहोश भएका छन् । त्यो कुरा सुन्नसाथ उनी बगैंचा गएर हेर्दछन् त चन्द्रदत्त मरिसकेका

थिए र तिनको मुखबाट नीलो-कालो फींज बगिरहेको थियो। मित्रको त्यो हाल देखेर राजकुमार अनेक थरिका विलाप गर्दै रुन कराउन लागे! संसारको गति यही हो, भनेर अनेक व्यक्तिले सम्झाइ-बुझाइ गरेपछि केही शान्त भए। अनि केही मानिस खटाएर चन्द्रदत्त को मृत-देह गङ्गामा विसर्जन गर्न पठाए। दैवसंयोग बाटोको शीतल हावा लाग्नाले विषको प्रभाव केही कम भयो र होश आयो। अनि आफूलाई बोकेर लैजाने मानिसहरूलाई सोधे—हे भाइ हो! मलाई कहाँ लगिरहेका छौ? ती मानिसहरू सर्पले टोकेर मरेको मानिस कसरी जीवित भयो? भनी कुरा गर्न लागे। अनि चन्द्रदत्तले फेरि भने—हे भाइ हो! मलाई सर्पले टोकेको होइन। म यहाँ भयङ्कर जालमा परें, तापनि म त्यो सबै कुरा भन्न शक्तिन। अहिले ससित अरू त केही छैन, यो करधनी छ, यही लैजाओ र म बाँचेको कुरा कसैलाई पनि नभन्नु। अब म आफ्नो देशतिर जान्छु। यति भनेर ती मानिसहरूलाई बिदा दिएर आफूचाहिं त्यहीं बसेर एक छिन विचारमा गाडिए——हेर मैले पद्मावतीको कसरी उपकार गरें, तिनको मिलन गराएँ, त्यसको साटो आज तिनले मलाई जहर खान दिइन्। यस स्थितिमा त एक दिन तिनले मेरो मित्रको हत्या गर्न पनि बेर छैन। तर मेरा मूर्ख मित्रलाई पद्मावती बाहेक अरू केही पनि चाहिएको छैन। यति विचार गरी कपाल मुडाई, खरानी घसी, नयां रूप फेरेर

योगी बनी पद्मावतीके महल अगाडि धुनी जमाएर बसे। उता मलामी गएका सबैले राजकुमारलाई हजुरका मित्रको लाश नदीमा बगाइदियौं भनी घर-घर गए।

त्यसपछि राजकुमार आफ्ना साथीको शोकमा ऐश-आराम खान-पान त्यागेर एकान्तमा बसी उसकै सम्झना गरी हर बखत रोएर मनको दुःख पोख्दथे।

हरे! मित्र! छाड्यौ तिमीले मलाई।
दियौ आज यो जीवितैमा जलाई॥
म भन्दा तिमीले सबै छाडि आयौ।
मलाई यहाँ आज एक्लो गरायौ॥
म जाऊँ कहाँ? के गरूँ ली बताऊ।
मलाई सबै बात आई बुझाऊ॥
गक्कुटी बस्यौं बालकै देखि, जान।
भएँ आज एक्लो म बिर्सी तमाम॥

सुगाले भन्यो—हे मैना! यसै प्रकार राजकुमारले अनेक विलाप गर्न लागेको देखी पद्मावतीले सम्झाउने विचारले भनिन्—हे नाथ! कालमा कसैको बल पुग्दैन। हजुरको उनीसित त्यति नै संयोग थियो। अब रोएर के हुन सक्दछ! यसरी सम्झाउँदा उनलाई केही शान्ति भयो। मित्र-लाई विष दिएर मारेको भन्ने कुरा उनलाई थाहा हुन सकेन। स्वास्नी मानिसको चरित्र देवता त जान्न सक्तैनन्

भने तो विचरा के जानुन्। यही क्रममा राजकुमारका दिन बित्न लागे।

एक दिन बेलुका तिर राजकुमार हावा खाना बाहिर निस्केका थिए, नगीचै योगीको आसन देखेर प्रणाम गरे। योगीले आशिर्वाद दिई सोधे—ए बच्चा! तिम्रो कल्याण होस्, सबै किसिमका विपत्तिबाट बाँचिरहे। यसै गरी राजकुमार कहिले काहीं योगीनेर जान थाले। एक दिन योगीले भने—बाबू! तिमी किन खिन्न र उदास छौ, म तिमीलाई सधैं यस्तै देखिरहेको छु। राजकुमारले भने—हे योगिराज, म आफ्नू विकलताको विषयमा भन्न असमर्थ छु, किनकि भन्न लाग्दा मेरो मुटु नै चुँडिए जस्तो हुन्छ। मेरो प्राणभन्दा प्रिय र बालसखालाई सर्पले टोकेर मरे। ती मरेकै दिनदेखि उनैको वियोगमा मेरो यो गति भइरहेछ। त्यति सुनेपछि योगीले भने—तिम्रो बालसखा मरेका छैनन्। मेरो यो सत्य वचनया विश्वास राखे। मैले यो आफ्नू योगबलले जानको हुँ।

योगीका कुरा सुनी प्रसन्न भएका राजकुमार योगीलाई प्रणाम गरी साथीसित भेट हुने आसमा महलमा रहन लागे। संयोगले एक दिन राजकुमारी बगैंचा डुल्न गएकी थिइन्, बाटैमा यौटा घरमा कामदेव झैं सुन्दर नवयुवक कुनै सेठको छोरो बसेको देखिन। दुबैको नजर चार हुनासाथ ती

मोहित भइन्। अनि महलमा आएर रात परेपछि आफ्ना पति राजकुमारलाई खाने कुरामा बेहोश हुने वस्तु खान दिई उनी अचेत भएपछि सेठको छोरोकहाँ गई इच्छा पूर्वक भोग-विलास गरी, प्रातःकाल हुनुभन्दा पहिल्यै आएर पलंगमा सुतिन्। यसै प्रकार पद्मावतीको अनाचार बढ्दै गयो। एक दिन राजकुमारले आफ्नू घर जाने इच्छा गरेर सासू-ससुरासित विदा मागी घर जाने तयारी गर्न लागे। रात परेपछि पद्मावती सेठको छोरोकहाँ गइन्। त्यस दिन तिनी-लाई कतै जान लागेकी देखेर चन्द्रदत्तले यो स्त्री नित्य कहाँ जान्छे, यसको हाल जान्नु पर्दछ भनी थैटा हतियार लिएर त्यसको पछिलागे।

पद्मावती सेठको छोरोकहाँ पुगेपछि पहिले त दुवैले खूब आनन्द भोगे र मैयाँले भोलि म आफ्नो लोग्नेसित घर जान्छु भन्ने कुरा गर्दा सेठको छोरोलाई रिस उठ्यो र भन्यो—ए रांडी! वेश्या! तेरो निम्ति मैले आफ्नू व्यापार बनिनू; आफ्ना सम्बन्धीसित शत्रुता लिएँ, अब तँ घर जान्छु भन्दैछस् भनी कैंचीले सबै कपाल काटिदिएर कुरूप पारिदियो र त्यहाँबाट धपाइदियो। त्यस दुष्टको कुकृत्य देखेर चन्द्र-दत्तलाई रिस उठ्यो र त्यसलाई त्यहीं दुइ टुक्रा पारी आफ्नू धुनिमा आएर बसे। उता पद्मावती आफ्नू कोठीमा

आउनासाथ कराइन्-गुहार, गुहार! मेरो लोग्नेले मलाई कुट-पीट गरी कपाल समेत काटिदिए। मलाई बचाओ! तिनको शब्द सुनेर केटी सुसारेहरू दगुर्दै आइपुगे र तिनले राजपुत्रीको स्वरूप देखेर सरासर महारानीकहाँ खबर दिए र त्यो समाचार राजाले थाहा पाउनासाथ पुलिस पठाएर राजकुमारलाई पक्रन लगाएर तत्काल यस व्यक्तिलाई काटिदनु भन्ने आज्ञा दिए। पोडेहरूले तिनलाई लैजान लाग्दा चन्द्रदत्त त्यहाँ पुगी हात जोरेर भने—सरकार! कसैलाई पनि राजाले विचार नगरी दण्ड दिनु अनुचित हो। फेरि हजुरको छोरीको कपाल यी राजपुत्रले मुडेको होइन। तिनको गुप्त प्रेम यौटा सेठको छोरोसित रहेछ, उनी त्यो-सित सधैं भेट गर्दथिन्। हिजो राति पनि तिनी घरबाट निस्केपछि मलाई शङ्का लाग्यो र म पछिलागें। ती दुबैको भेट भयो, खूबसित आनन्द, भोग-विलास गरिसकेपछि मैयाँले 'म भोलि घर जान्छु' भन्दा उसले रिसाएर कपाल मुडिदिएको हो। त्यो सब कुकृत्य देखेर मलाई रिस उठ्यो र त्यस दुष्टलाई त्यहीं दुइ टुक्रा पारेर आएँ। यदि यो कुरामा विश्वास छैन भने हेर्न पठाए ज्ञात हुनेछ—मैयाँको कपाल र सेठका छोराको लाश त्यहीं होला। मेरो नाम चन्द्रदत्त हो र म राजपुत्रको अभिन्न मित्र हूँ। एक दिन

मलाई पनि मैयाँले विष दिएकी थिइन् तर म ईश्वरको इच्छाले बाँचें ।

चन्द्रदत्तको कुरा सुनी राजाले हेर्न पठाए र त्यो सत्य पाएपछि राजकुमारलाई छाडिदिए । उनले आफ्नो मरिसकेको मित्रलाई चिन्ही अंकमाल गरी भने—मित्र ! तिम्रो दयाले नै आज म बाँचें । मलाई पहिले पनि तिमीले धेरै बुझाएका हौ तर मैले तिम्रो अर्ति नसुनेका फल प्रत्यक्ष पाएँ प्राण रक्षा गरिएकोमा ईश्वरलाई करोडौं प्रणाम छ । यति भनेर दुबै मित्र त्यसै दिन आफ्नु देशतिर फर्के । हे मैना ! राजकुमार र पद्मावतीमा कस्तो अनन्य प्रेम थियो । तर पद्मावतीले कस्तो ईमान छोडिन् । अब स्त्री जातिको कसरी पत्यार गर्नें तिमी नै भन । यसैले म स्त्रीजातिको कहिल्यै विश्वास गर्दिन । सुगाको कुरा सुनी मैनाले भनी—तिमीले भनेको पनि सत्य होला तर म पनि तिमीलाई यसको उत्तर दिन्छु, ध्यान दिएर सुन—

तोता-मैनाको कथा तृतीय भाग सकियो ॥३॥



# तोता मैनाको कथा

## चौथो भाग

सातौं कथा मैनाको—

हे सुगा ! अब म पुरुषको निर्दयताको वर्णन सुनाउँछु—त्यो सुनेर लाज लागी यहाँबाट नभागे। सुगाले भन्यो—हे मैना ! व्यर्था आक्षेप नगर। तिमीलाई पुरुषको निर्दयताको पाँच-दस कथा आउँदो होला, तर मैले सबै कथा सुनाउने हो भने यौटा मोटो पुस्तक नै तयार हुनेछ। सुगाको यति कुरा सुनी मैना भन्दछे—यही भारतवर्षमा यौटा सबै तरहले सम्पन्न काशी ( वाराणसी ) नामको, हिन्दू धर्म मान्नेहरूको पवित्र तीर्थ स्थान छ। त्यहाँ कुमार र कन्याहरूका अनेक विद्यालय छन्। त्यहीं रामकृष्णका पाठशालामा अनेक विद्यार्थीहरू पढ्दथे। तिनमा यौटा कृष्णदत्त नामका अत्यन्त-रूपवान अन्दाजी बाह-तेह वर्षका मथुरापुरीका निवासी ब्राह्मण पनि पढ्दथ्यो। काशीभन्दा पाँच-सात कोश पर यौटा अर्को नगर थियो, त्यहाँ यौटा निकै धनाढ्य सेठ बस्तथ्यो। उसले कुनै पर्वमा एक लाख सुनका अशर्फी

संकल्प गरेर एक-एक अशर्फी बांड्नथाले। त्यहां गई अशर्फी पाउने ब्राम्हणहरू द्वारा त्यो समाचार काशीसम्म आइपुग्यो र रामकृष्ण विद्यालयका छात्रहरू पनि अशर्फी प्राप्त गर्न हिंडे। कृष्णदत्त पनि उनैहरूका साथमा जान तयार भए। अनि गुरुले भने—हे शिष्य हो ! तर मेरो एक कुरा सम्झिराखे---बाटोमा कहीं श्यामा चरो देखियो भने त्यसलाई दाहिने गरेर मात्र जानु। गुरुको कुरा सुनेर सबै विद्यार्थी हिंडे। झण्डै एक कोश पर पुगेपछि यौटा रूखमाथि श्यामा चरो बसेको देखेर सबैजना उसलाई दाहिने पारेर जाने उद्योग गर्नलागे। विद्यार्थीहरूको कोलाहल देखेर श्यामा त्यहांबाट उड़ी। सबै विद्यार्थीहरू त्यसलाई दाहिने पार्न दगुरे अलिपर गएपछि सबै थाकेर फर्के तर कृष्णदत्तले गुरुका-वचन सम्झेर यो श्यामा जति पर गए पनि दाहिने नपारी जान्न भनेर जता-जता चरा गयो उतैतिर दगुरे। सांझ पर्ने बेलामा यौटा रूखमा श्यामा बसेपछि उसलाई दाहिने पारेर त्यहांबाट हिंडे। ऊ शहरमा पुग्दा आधा रात भइसकेको र सेठको ढोका पनि बन्द भईसकेको र बाटोको थकाई, भोक-प्यास लागे पनि ती यौटा खाली स्थान सुते।

हे सुगा ! दैवसंयोग त्यसै दिन त्यहांका राजाकी छोरी चन्द्रावतीको बिहे थियो र अर्को शहरबाट जन्ती आएका

थिए। नर दुलहा कानो हुनाले त्यसका पितालाई—मेरो छोरो कानो भनेर समधीले छोरी दिएनन् भने ठूलो बेइज्जती हुनेछ, यरू कुनै राम्रो केटोलाई वरको लुगा-गहना पहिराई लगेर विवाह नगरिएपछि केही द्रव्य दिई उसलाई बिदा गरिदिए असल होला र मेरो छोराले स्वास्नी पाउने छ—यस्तो विचार गरेर मन्त्रीलाई सबै बुझाएपछि उनले हजुरले यो राम्रो विचार गर्नुभयो भने। अब यो कुरा कुकाई शहरमा गएर यौटा सुन्दर केटो खोजेर ल्याऊ भनेको हुनाले मन्त्री शहर गएर केटो खोज्न लागे। त्यसै मौकामा कृष्णदत्तलाई पसलको पाटीमा बसेको देखी सोधे—'हे युवक! मेरो यौटा काम छ त्यो तिमीले गरिदियौ भने म तिमीलाई प्रसन्न इनाम दिनेछु।' कृष्णदत्तले—'के काम हो आज्ञा हवस्' भन्दा मन्त्रीले भने—हामी आज तिमीलाई दुलाहा बनाउँछौं, भोलि बिहा भएपछि आफ्नु इनाम लिएर बिदा गरिदिने छु। त्यति सुनी कृष्णदत्तले त्यो कुरा स्वीकार गरेपछि मन्त्रीले उनलाई साथमा ल्याए। राजाले लड्का देखेर प्रसन्न भई वरको लुगा गहना पहिराई दुलहा बनाएर जन्ती लगे। कन्या-पक्षतिर खूब हर्षसाथ नाच-गान भयो। दुलहालाई यज्ञमा लगे। रानीहरू प्रसन्न भए। वेदको विधानले सारा विवाह कार्य सम्पन्न भयो। त्यसपछि चन्द्रावती र कृष्णदत्त यौटा कोठामा आई आपसमा कुरा-कानी

भोग-विलासमा लिप्त भए। निकै बेरपछि चन्द्रदत्त भोक प्यासले व्याकुल भएर अलपत्र परे।

अन्यमा लाचार भएर पत्नीसित भने—'प्रिये, हिजो-देखि मैले केही खाएको छैन। यस बखत मलाई भोकले गर्दा तिमीसित ख्याल-ठट्टा गर्न पनि मन लागिरहेको छैन।' पतिको कुरा सुनी चन्द्रावतीले भनिन्—स्वामी, हजूरले अघिनै किन नभनेको? भण्डार पनि बन्द भइसक्यो, म के उपाय गरौं? कृष्णदत्तले फेरि भने—'प्यारी! जसरी भए पनि केही खाने उपाय गर, नभए म भोकले प्राणदिने छु।' चन्द्रा-वतीले भनिन्—'हे नाथ, हिजो पूजा गर्दा आमाले दिएको कसार र चामलको पोको मसित छ। त्यो बाहेक अरु केही छैन" कृष्णदत्तले—'त्यही भए पनि ल्याऊ' भनेपछि उनले कसार र चामल ल्याई आफ्नू वस्त्र पोलेर भात पकाई खान दिइन्। त्यति खाएपछि अलि शान्ति भयो र कृष्णदत्त पत्नीसँग कुरा-कानी भोग-विलास गरेर रात बिताए। बिहान हुन लागेपछि पत्नी सुतीन् र कृष्ण-दत्त उठेर जन्तीहरूको बसेको स्थानमा गए। राजाले सबै वस्त्र गहना फुकाली हजार रुपियाँ दिएर बिदा गरे। ऊ पनि पैसा लिएर काशीतिर हिंडे। उता प्रातः हुनासाथ भानसा तयार भयो र दुलहालाई खान डाके। उनका पिताले छोरोको कानो आँखामा पट्टी बाँधेर पठाइदिए, मित्र पुगेपछि

कन्यातिरका सर्व जना एक मुख भएर भन्नलागे—–राती त दुलहाको आँखा मद्दे थियो, अहिले के भयो? दुलहा-तिरका मानिसहरूले भने—–हिजो राती ठीकै थियो तर आज कुन्नि किन हो दुखिरहेको छ। तिनीहरूको कुरा सुनी चन्द्रावतीले पनि हेरिन् र उनलाई तुरुन्त थाहा भयो कि यो पुरुष रानी सँग बस्ने राजकुमार होइन। यसमा अवश्य कुनै छल परेको छ। त्यसपछि माता-पितालाई डाकी हाल जाहेर भनिन्—–हे पिता, माता मैले हजुरसित भन्ने कुरा त होइन तर म विवश छु किनकि नभनी काम पनि नचल्ने र धर्म पनि नष्ट हुने स्थिति आएर विवश भई अनुचित कुरा बोल्न भलाई कर लाग्यो। धर्मशास्त्रमा लेखिएको पनि छ—

आफ्नु सम्पत्ति देह गेह सहितै, वा लोक-लज्जा पनि।
आफ्ना बान्धव इष्ट-मित्र जति हुन्, तिन्लाइ त्यागनू अनि॥
धौटा धर्म प्रधान जानि तनले, सर्वस्वले नै पनि।
रक्षा पर्दछ गर्नु धर्म-द्वयको कर्तव्य यै हो भनी॥
आआम ग्रन्थ बहु प्रसन्न मनले, त्यसलाई त्यागी दिनु।
ठूलो धर्म कुरा उतैतिर सदा, यो चित्त ठल्काउनू॥
मैले बोल्नु छिन्न उत्तम यहाँ, यस्तो स्थितिमा तर।
खाशुन्नै सबका म भन्दछु कुरा, त्यै धर्मको खातिर॥

'हे माता-पिता! यो हजुरहरूको सामुन्ने मैले भन्ने

कुरा त होइह, तर विवश छु—किनकि सत्य कुरा नभनौं भने धर्म नाश हुन आँटेको हुनाले भन्न पर्‍यो।

त्यति सुनेपछि राजाले भने—मैयां! यस स्थितिमा तिमीले उचित अनुचित जे भने पनि म क्षमा गर्ने छु। अतः आफ्नू मनको कुरा भन। अनि मैयांले भनिन्—हे पिता! हिजो जोसित मेरो बिहे भएको थियो र जो राती मेरो कोठामा सुतेका थिए तो मेरो पति होइनन्। यी कुनै अर्कै व्यक्ति हुन्। उनी जस्तो रूपवान थिए यिनी त्यस्ता छैनन्, फेरि उनका आंखा आज बिहानसम्म मृगका झैं चंचल र स्वच्छ थिए। यिनको यौटा आंखानै फुटेको छ। यति सुनेपछि राजा क्रोधित भएर उनको आंखाको पट्टी खोल्न लगाएका त कानो देखे। अनि जन्ती सहित सबैलाई तत्काल मेरो देश छाडेर जाओ भन्ने आज्ञा दिई सम्धी हुन खोज्नेलाई डाकेर बेसरी हप्काई त्यहांबाट पठाए। त्यसपछि राजा चिन्तामा गाडिए! अनि पिताको स्थिति जानेर छोरीले एक दिन भनिन्—हे पिता! हजुर किन मेरो निम्ति चिन्ता गर्नु हुन्छ? माता-पिता केवल जन्मका साथी हुन्—कर्मका साथी हुन सक्तैनन्। फेरि यसमा हजुरले त सकेसम्म विचार गरेरै दिएको हो; अब अहिले यस्तो पर्न आयो, यो त दैवको लीला हो।

न भई नहुने जो छ अवश्य हुन्छ जान्नुहोस् ।
नहुने जो छ त्यो हुन्न कहिल्यै भनि मान्नुहोस् ॥

हे पिता ! यसै विषयको म यौटा उदाहरण दिन्छु—यौटा भद्रपुर नामको नगर थियो । त्यहां रामनाथ नामका कोही सेठ रहन्थे । तिनका सात छोरा थिए र सबैका पत्नीहरू पनि थिए । संयोगले रामनाथका घरमा यौटा प्रेत (राक्षस) प्रकट भएर तिनका सबै बुहारी र छोराहरू एवं सेठ-सेठानीलाई मारिदियो । केवल माइत गएकी कान्छी बुहारी मात्र बाँची । त्यो गर्भवती थिई । अब त्यस घरमा राक्षसको राज्य भयो । केही दिनपछि कान्छी बुहारीले माइतमै छोरो पाई । त्यो छोरो शुक्लपक्षका चन्द्रमा झैं प्रतिदिन बढ्दै गयो । अलि ठूलो भएपछि त्यो खेल्न जानलाग्यो । एक दिन खेलमा परस्पर झगड़ा भयो र उसका साथीहरूले भने—आफ्नू पिताको घरबार छाडेर मावलीमा मतुवा बसेको तँ हामीसित खेल्ने लायक छैनस् । साथीहरूका त्यस्ता कुरा सुनी मनमनै क्रोधित भएको बालक आफ्नी आमाकहां आएर भन्न लाग्यो—माता ! हाम्रो घर कहां हो ? अब म आफ्नू घर जान्छु । यहां बस्न तयार छैन । त्यसको कुरा सुनी—बाजे-बज्यै र मामाले पनि सम्झाएर भने—बाबू ! तेरो घर यही हो । अरु कुनै घर छैन । अनि त्यो बालकले भन्यो—यो त मेरो मावली हो । मेरो पिताको घर होइन । यदि घर बताउन्नौ भने म विष

पान गरेर प्राण त्याग्नेछु। छोरोको हठ देखेर आमाले भनी—बाबु! हाम्रो घर त भद्रपुरमा छ। निकै वर्ष अघि त्यहाँ योटा राक्षस प्रकट भएर तेरा पितासहित घरका सबै परिवारलाई मारिदियो। त्यस बेला म माइतमा भएकी हुनाले मात्र बचें। त्यस बेला तँ गर्भमा थिइस्। मैले त्यही राक्षसको डरले आजसम्म यो कुरा भन्न सकेकी थिइन।' आमाको त्यस्तो कुरा सुनेर घरको साँचो लिई आफ्नू घर जान तयार भयो। अनि घरका सबै मानिसले त्यहाँ जान हुँदैन, राक्षसले मार्दछ, भनी धेरै बुझाए तर उसले कसैको कुरा नसुनी सरासर गयो र घरको ताल्चा खोली भित्र पस्न लाग्दा राक्षसले भन्यो बालक! यहां नआइज, नत्र म तँलाई तेरा सबै परिवारलाई मारे झैं मारेर खानेछु। त्यसको कुरा सुनेर बालकले भन्यो—यदि तिमी मलाई खान्नौ भने म तिमीलाई अनेक थरिका मीठा-मीठा भोजन खान दिनेछु। बालकको कुरा सुनी राक्षसले 'हुन्छ' भनेपछि दुबै जना त्यहीं बस्न लागे।

एक दिन बालकले राक्षसलाई सोध्यो—तिमी दिनहूँ कहां जान्छौ? राक्षसले भन्यो—म विधाताको सभामा जान्छु। अनि बालकले भन्यो उसो भाए मेरो आयु कति वर्षको छ? विधातासित सोधिदेऊ। राक्षस गएर विधातासित सोध्यो—

संसित बस्ने केटोको आयु कति वर्षको छ ? विधाताले उत्तर दिए सत्तरी वर्षको छ।

राक्षसले आएर बालकलाई भनिदियो। अनि फेरि बालकले भन्यो—उसोभए त्यस आयुबाट दुइ वर्ष घटाइदिउन् वा एक वर्ष बढाइदिउन् भनेर सोध। राक्षसले फेरि गएर—विधातासित भन्यो—त्यस बालकको आयुबाट दुइ वर्ष बढाई वा एक वर्ष घटाइदिनु हवस भन्यो। विधाताले भने—मैले जो लेखिदिएँ त्यसमा अब कुनै किसिमको घटी बढी हुन सक्तैन। राक्षसले आएर बालकलाई त्यही कुरा भनि-दियो। अनि बालक त्यस बेला त केही बोलेन, भोलिपल्ट जब राक्षस बाहिर गयो तब खान-पान सकेर यौटा बल्दो अघुल्टो लिएर मूल ढोकामा बस्यो। ठीक समयमा राक्षस आएर बालकसित खाने कुरा माग्यो र बालकले—आज केही पनि खाने कुरा छैन भन्नासाथ राक्षसले उसो भए आज म तँलाई खान्छु भन्यो। अनि बालकले अघुल्टो लिएर लखेट्तै भन्यो—हे मूर्ख ! मेरो आयु घट-बढ गर्न विधाताको सामर्थ्य छैन भने तँ पाजी राक्षस के गर्न सक्तछस् ? भन्दै लखेटेर भगायो। अनि केहि दिनपछि आफ्नी आमा-लाई पनि त्यहीं ल्याएर सुखपूर्वक बस्न लाग्यो। अतः हे पिता ! विधाताले छैठीका दिन निधारमा लेखिदिएको कुरा कसैले मेट्न सक्तैन। कसैले भनेको पनि छ—

लेखेको विधिले जो छ, छैठीको दित भालमा।
मेटिन्न त्यो उनैले नै आँटे पनि त्रिकालमा॥

हे पिता! अब हजुर मेरो निम्ति कुनै शोक नगर्नुहोस्। जुन ईश्वरले आज दुःख देखाएको छ, उसैले भोलि सुख-सन्तोष पनि देखाउने छ। मेरा स्वामीलाई भेट्ने यौटा उपाय मैले विचार गरेकी छू—काशी जस्ता जस्ता ठूला-ठूला नगरमा—मेरी छोरी चन्द्रावतीले गरेका प्रश्नको उत्तर दिन सक्नेलाई लाख रुपियाँ इनाम दिइनेछ—भन्ने लेखेर अनेक स्थानमा टांस्न लगाइदिनोस। छोरीको यस्ता कुरा सुनी राजाले सबै स्थानमा कागत टांस्न लगाए। अनि त्यो समाचार जानेका अनेक विद्वानहरू आए। राजालाई साक्षी राखेर मैयांले ती पंडितहरूसित प्रश्न गरिन्—

भयो विवाहको पूरा विधि वेद विधानले।
पति-पत्नि गए भित्र, कोठामा भेटन हर्षले॥
शोक लागेछ त्यै बेला वरलाई असाध्यको।
भन्नोस् बुझाइ पण्डितजी, त्यसपछी हाल के भयो?

मैयांको त्यस्तो प्रश्न सुनेर कसैले पनि उत्तर दिन सकेन तापनि सबैलाई एक-एक अशर्फी दिई बिदा गरे। यही क्रममा निकै दिन बितेपछि एक दिन कृष्णदत्तले पनि मैयांको त्यो प्रश्न सम्बन्धी कुरा थाहा पाएर उत्तर दिन सके हजार र नदिन सके एक अशर्फि त अवश्य पाइनेछ भन्ने मनमा निश्चय गरेर तिनी सरासर उही स्थानमा गए

जहाँ उनको बिहे भएको थियो। अनि पिताको अगाडी बसी मैयांले उही प्रश्न गरिन्। अनि कृष्णदत्तले आफ्नू विवाह भएको कुरा सम्झी मैयांलाई भने—'हे राजकुमारी ! आधा मात्र किन सुनायौ, पूरा वर्णन गर। त्यति सुनेपछि मैयांले शंका गरिन्—यिनै मेरा पति हुन्, नभए मैले आधा मात्र कुरा गरें भन्ने कुरा इनले कसरी जाने। त्यसपछि फेरि भनिन्—महाशय ! मलाई त यति नै थाहा छ, यदि तपाई-लाई थाहा भए पूरा वर्णन गरेर सुनाउनोस्। अनि कृष्णदत्तले सुनाए—

काशीमा अघि पढ्दथें गुरुकहाँ चर्चा सुनी द्रव्यको।
आएथें म यहाँ, भने गुरुजिले, शिक्षा दिई बात यो॥
बाटामा शुभ हुन्छ पार्नु पथमा श्यामा मिले दाहिने।
त्यस्ले मंगल हुन्छ वैभव पनी, छौ खूब भेट्टाउने॥
देख्यौं हामि सबै निके पर पुगी, श्यामा चरी वृक्षमा।
विद्यार्थी सब दौड़िए पछि-पछि, त्यै पक्षिका साथमा॥
थाकी मित्र सबै फिरे म दगुरें, एक्लै लखेट्दै जब।
सन्ध्याकाल भयो र दक्षिण गरी, दौड़े म एक्लै तब॥
लाग्यो भोक मलाइ प्यास बहुतै, आएँ नगरमा जब।
ढोका बन्द थिए सबै घर-घरै, दुःखी भएथें तब॥
पाटीमा म सुतें र केहि क्षणमा, आएर क्वै सज्जन।
देखाई कन लोभ क्यै धन दिने, तिन्ले लगे त्यै क्षण।
पैह्राई गहना र वस्त्र बढ़िया, राम्रो सिंगारी दिए।
हात्ती माथि बसालि जन्ति सँगमा, प्रस्थान गर्दा भए॥
मैयाँका सँगमा विवाह हुनगो, उत्साहका साथमा।
कोठामा जब हामि दम्पति गयौं, आनन्द भो रातमा॥

लाग्यो भोक मलाइ त्यै बखतमा, खप्नै नसक्ने गरी ।
पोली वस्त्र पकाइ भात तिनिले ख्वाइन् र सोही घरी ॥
खाई भात मलाइ शान्ति मिलिगो क्यै बेरका खातिर ।
फेरि हामि दुवै कुरा पनि गर्‍यौं आनन्दका सुन्दर ॥
मैयाँलाइ तुरुन्त छोपि निद्ले, ताहीं निदाइन् जब ।
प्रातःकाल भया उठेर म गएँ, ती सेठ काहाँ तब ॥
तिन्ले द्रव्य दिए भने जति अनी, आनन्द मानी कन ।
मैले वस्त्र दिएँ फुकालि गहना, पोको बनाई कन ॥
काशी तर्फ हिँडे लिएर धन त्यै, आनन्द मान्दै तब ।
केही कालपछी विवाहतिरको बिर्से कुरा तो सब ॥
हे मैयाँ ! जति जान्दथें सब भनें, यै हो बितेका कुरा ।
लिन्छो जे छ विचार त्यो मन शुभे, एकेक सुन्छु पुरा ॥

कृष्णदत्तको त्यस्तो उत्तरसुनेर मैयाँले आफ्नू पितालाई भनिन्—हे पिताजी ! उस दिन विवाह हुने मेरा पति यिनै हुन् । अनि राजाले कृष्णदत्तको आदर सत्कार गरी आफ्नू महलमा राखे । मैयाँले पनि तन-मन-धनले पतिको चाकरी बेसरी गरिन् । दुवैमा अगाध प्रेम भयो । यौटाले अर्कोलाई देख्न नपाए व्याकुल हुन्थे । यही क्रमले तिनीहरूका दिन आनन्दमा बितिरहेका थिए । पछि एक दिन कृष्णदत्तले विचार गरे—माता-पिताको दर्शन नगरेको धेरै दिन बितिसक्यो, अब घर जानु वर्नै हो, तर यी मैयाँलाई लिएर जाउँ भने मेरा परिवार, स्वजनले राजाकी छोरी विवाह गरेर ल्यायो भन्ने

थाहा पाउना साथ जात-पात बाहेक गरिदिनेछन् । यी मैयांलाई यहीं छाडेर जाउँ भने पनि यिनले पता लगाई घरै आइपुग्न बेर लाग्दैन । यस्तो विचार गरेर कृष्णदत्तले रातको बीचमा राजकुमारीलाई ,दुइ टुक्रा पारी । सकेसम्म सम्पति लिई त्यहाँबाट आफ्नू घरको बाटो समाते ।

यति कथा सुनाइसके पछि मैनाले भनी—सुगा ! अब टाउको निहुराउने काम छैन । कृष्णदत्त जस्ता पापी पुरुष पनि संसारमा जन्म लिन्छन् । फेरि मैयाँको के अपराध थियो र प्राण गुमाइन् । तिनले त धर्म विचारे र नै पतिको खोजमा पूरा सहयोग दिएर पत्ता लगाइन् । त्यसैले मलाई पुरुष वर्गमाथि एक रति पनि विश्वास लाग्दैन । सुगाले भन्यो—हे मैना ! म यसको पनि उत्तर दिन तयारछु, किनकि स्त्रीहरूको बेइमानीको कथा म धेरै जान्दछु । अब ध्यान दिएर सुन—

## आठौं कथा सुगाको—

सुगा भन्दछ—हे मैना ! कंचनपुर नामको नगरमा अंगध्वज नामका राजा राज्य गर्दथे । तिनकी रानीको नाम चन्द्रावती थियो । ती पतिव्रता र सुशीला थिइन् । एक दिन राजाकहाँ थोटा ब्राह्मण आए र दुइ टुक्रा कागज दिए । त्यो कागजमा लेखिएको थियो—

जागा बस्नन् जो नृप, गर्दै लोक विचार ।
त्यस्को फल उत्तम मिली, राख्ला श्रेष्ठ विचार ॥

अर्को टुक्रा कागजमा लेखिएको थियो—

जो गर्छ सत्कार ठूलो, जानी शत्रु भनी ।
त्यस्लाई गर्छ भलो, वैरी हो तपनी ॥

राजाले ती दुवै कागज लिएर सुरक्षित राखे, अनि ब्राह्मणलाई उचित पारिश्रमिक र भोजन दक्षिणा दिई विदा गरे । क्यै दिनपछि राजाले ब्राह्मणका वचनको परीक्षा गर्ने विचार गरेर एक रात सबै काम सकिए-पछि पनि नसुतेर जागै रहे । निकै दिन बितेपछि एक दिन आधा रातको समयमा राजा महलको अटालीमा बसिरहेको बखत कुनै दुखिया स्त्रीलाई रोइरहेको सुने । राजाको मनमा दया लाग्यो र मनमनै सोचे-यस्ता दुःखी पनि मेरो राज्यमा रहेछन् यसको कष्टको कारण जान्नुपर्‍यो, किनकि राजाको कर्तव्यका विषयमा यस्तो लेखेको पनि पाइन्छ—

राजाले निज पुत्र झैं हित गरी गर्छन् प्रजा पाउन ।
दोषीको अपराध माफिक सदा, नै दण्ड दिन्छन् जुन ॥
दोषी मुक्त भएर दण्डित भयो, निर्दोष व्यक्ती भने ।
राजाकै अपराध हुन्छ र पछी, हो नर्कमा गाडिने ॥

यस्तो विचार गरेर शस्त्रहरू लिई जताबाट रोएको ध्वनि आइरहेको थियो, उतै गए । अलि पर यौटी सय वर्ष

जतिको बुढी रुँदै पीठो पिन्दै गरिरहेकी देखेर सोधे—ए आमै ! तिमीलाई के दुःख परेर यो रातका बीचमा रोइरहेकी छौ ?' यी राजा हुन् भन्ने नचिनी बुढियाले भनिन्—तिमी परदेशी मानिसलाई मेरो कष्ट जान्ने के चासो ? तिमी आफ्नू बाटो लाग। मेरो दुःख मेटेर साध्य छैन। फेरि मेरो दुःख हटाउन स्वयं ब्रह्मा आए पनि सक्दैनन् भने, तिम्रो के लागत ! बुढियाको कुरा सुनेर उसको कष्ट जान्न उत्सुक भएका राजाले फेरि सोधे—'आमै ! आफ्नू कष्ट मलाई भनेर त हेर, मैले प्राण दिएर पनि हटाउने प्रयत्न गर्नेछु।' राजाको त्यस्तो आग्रह देखेर बुढियाले भनिन्—तिमी जिद्दी गर्छौ भने म भन्न तयार छु, तर यो कुरा अन्य कसैलाई भन्यौ भने तिम्रो शरीर तत्काल टुक्राको हुनेछ। मेरो कष्ट के हो भने—भोलि राति योटा सर्प आएर यस देशका राजा अंगध्वजलाई डस्नेछ र तिनको सर्वनाश हुनेछ, किनकि राजाको र सर्पको पूर्व जन्मको शत्रुता छ। राजा अंगध्वज पूर्वजन्ममा योटा सेठका छोरा थिए। तिनको नाम मणिसेन र रानीको नाम केशर थियो। ती बीस वर्षकी र अत्यन्त सुन्दरी भए पनि तिनको आचरण ठीक थिएन। एकपल्ट मणिसेन आफ्नू व्यापारको काममा परदेश गए, तिनकी स्त्री एक्ली भइन्। तिनको अठार वर्षको सुन्दर योटा सेवक थियो। केशरलाई कामदेवले कष्ट दिएको हुनाले त्यही

सेवकलाई डाकेर कोठामा लगी र भनी—आज कामदेवले मलाई धेरै कष्ट दिइरहेको छ, अतः तिमी मसँग यहाँ बसेर मेरो यौवन-सुख भोग। म तिमीसित साथा-प्रेम गर्दछु र बाँचुञ्जेल तिम्रो सेवा गर्नेछु! आफ्ना मालिकनीको त्यस्ता कुरा सुनेर सेवकले भन्यो—'म यस्तो पाप कर्म, त्यो पनि तपाईंसित, कदापि गर्न सक्तिन! फेरि आफूलाई अन्न वस्त्र दिएर पाल्ने त माता-पिताको समान हुन्छन् तिनका साथ घात गर्ने नरकमा पर्दछन्, भन्ने पनि मैले सुनेको छु।' त्यसपछि केशरले भनी—मैले भनेको मानेनौ भने तिमीले आफ्नो जीवन नै त्याग्नु पर्ने गराइ-दिनेछु।' केशरले यसरी भय देखाउँदा पनि सेवकले मानेन र आफ्नू असफलता विचार गरी—मैले यो मूर्खलाई डाकेर यस्ता कुरा भनु ठूलो चूक भयो। अब यसले स्वामी आएपछि सबै कुरा सुनायो भने मेरो ठूलो दुर्गति हुनेछ इत्यादि विचारेर मन मारेर बसी।

केशरको पति आएपछि ऊ खिन्न रहन लागी। मौका-को प्रतिक्षा गर्दै थिई। अनि उसको पतिले सोध्यो—तिमी किन उदास छौ? मलाई भन! अनि केशरले भनी—'स्वामी! मलाई यहाँ केही कष्ट छैन। सबै सुख प्राप्त छ, तर हजुरको सेवकले हजुर परदेश गएको बेला आधा रातको बीचमा अकस्मात आएर मेरो छातीमा चढी धर्म लुटने विचार गर्दा मेरो निद्रा खुल्यो र सेवकलाई देखेर दुवै हातले

बचेटी चिच्याएँ । रात्रि हुनाले बसैले थाहा पाउन सकेनन र त्यो पनि भयभीत भएर कोठाबाट भाग्यो । ईश्वरको कृपाले मेरो धर्म बच्यो !' त्यांत सुनेपछि केशरको पतिले भन्यो—प्रिये ! यसमा तिमीले दुःख मान्नु पर्दैन, म आजै त्यसको काम समाप्त गरिदिन्छु भनेर क्रोधले अन्धा भएको र स्त्रिया चरित्र नबुझेको मूर्खले सेवकलाई डाकेर—'अरे दुष्ट ! लौ, आफ्नू कर्मको फल भोग' भन्दै तरवारले दुई टुक्रा पारिदियो । आज त्यही सेवक सर्प भएर साटो फेर्न आइरहेको छ । उही केशरको पति अंगध्वज राजा भएका छन् । ती राजा जस्तो धर्मात्मा अरु को होला ? भन्ने चिन्ताले नै म रोएकी हुँ । यति सुनेर राजाले फेरि सोधे—'आमै ! तपाईंले पूर्वजन्मको हाल वर्णन गरेको सुन्दा आश्चर्य लाग्यो ।

त्यो सर्प कहाँ बसेको छ र कुन रूपमा कुन बेला आउँछ, सो पनि जान्न पाए चित्त बुझ्ने थियो ।' राजाको कुरा सुनी बुढी-ले उत्तर दिइन्—हे परदेशी ! यो शहरको पश्चिमतिर याँटा ठूलो वरको वृक्ष छ, त्यसैको टोड्काबाट निस्केर दक्षिणको फाटकबाट आई साटो फेर्नेछ ।

यति कुरा सुनेर राजा महलमा त आए तर तिनलाई निद्रा लाग्न सकेन र आफूले दिएको दोस्रो वागन झिकेर

हेर्दा उनको योटा वचन सत्य भयो। अब यमको पनि परीक्षा गर्दछु भन्ने निश्चय गरेर आफ्नू प्राण लिन आउने शत्रुको स्वागत गरे। प्रातःकाल हुनासाथ मन्त्रीलाई डाकेर भने—'आज राती दस बजे मेरो पूर्वजन्मको वैरी, जो सर्पको रूपमा छ, मेरो प्राण लिन आउनेछ। अतः म सुत्ने पलंगदेखि सर्प बस्ने ठेगानसम्म सफा गरी सुगन्धित वस्तु छर्केर स्थान-स्थानमा सुनका कचौरामा मसला हालेको मीठो दूध राखिदिनू।' यति सबै काम पूरा गरेर राजाको नगीच आएर बसे। आफ्नो समय भएपछि सर्प पनि निस्क्यो। बाटोको सजावट र खानेकुरा देखेर उसको मन सहसा पग्लियो। बाटोमा सुगन्धित फूलहरूमा खेल्दै दूध खाँदै महल नगीच पुगेपछि सर्पको मनमा आयो—शत्रुको पनि यस्तो स्वागत गर्ने यो राजा धन्य रहेछन्। मैले इनलाई टोक्न हुँदैन आएपछि भेट गरेर जानुपर्छ—नभए मैले क्षमा गरिदिए भन्ने कुरा राजालाई थाहा हुन सक्तैन। यति विचार्दै राजाको नगीच आइपुग्यो। सर्प देखेर मन्त्री उसलाई मार्न तरबार लिएर उठे, तर राजाले तिनको हात समाई भने—'मन्त्री! यो के मूर्खता गरिरहेका छौ? अतिथिलाई मारेर पापको भागी बन्ने इच्छा छ?' अनि सर्पतिर फर्केर भने—नागराज! स्वागत छ। अब मलाई टोकेर आफ्नो बाटो फेर्नुहवस्। यति सुना सर्पले भन्यो—शत्रुको पनि यस्तो

सत्य स्वागत गर्न सक्ने तिमी धन्य रहेछौ। अब हामी दुवै-को वैरत्व समाप्त भयो। म जान्छु भनी विदा भयो। राजा-लाई ब्राह्मणका दुवै कुरा सत्य भएकोमा निकै हर्ष लाग्यो। यो सबै कुरा रानी पनि हेरिरहेकी थिइन् र उनले राजा-लाई भनिन्—हे स्वामी! यो कुरा हजुरलाई कसरी थाहा भयो? अनि राजाले भने—यो कुरा जसले मलाई सुनायो, उसैको भनाइ छ, मैले यो रहस्य प्रकट गर्नासाथ म ढुंगा हुनेछु। रानीले भनिन्—राजा! हजुर ढुङ्गा भए पनि म त्यो कुरा अवश्य सुन्दछु। यति सुनेपछि राजा चिन्तित भए र अरु केही नबोली केवल यति भने—तिमी मान्दिनौ भने गंगाको तटमा हिंड, म उहीं सुनाउँछु र ढुङ्गा भई त्यहीं बसिरहन्छु। यति भनी गंगा किनारमा गए। त्यहाँ पुगेर पनि रानीलाई सबैले सम्झाए तर स्त्रीहरूको अगाडि कसैको पनि जोर चलेन, पशु वाक्य बुझ्ने ती राजा पत्थर हुन तयार भएकै बेला त्यहाँ बाख्रीहरूको एक बथान पानी खान आयो। सबै पानी पिएर गए, केवल यौटी बाख्री गङ्गामा बगिरहेको यौटा फल देखेर अडिएकी थिई। बोकाले त्यस-लाई देखेर किन यहाँ अडिएकी भनेर सोध्यो, अनि उसले भनी—त्यो पानीको फल मलाई दिन्छौ भने जान्छु, नभए म यहाँबाट जान्न। यति सुन्नासाथ बोकाले भन्या—मलाई पनि यो ढुङ्गा बन्न आएको अंगध्वज राजा झैं मूर्ख ठानेकी छस्?

म त्यस्तो जोइटिंग्रे होइन, म पानीमा बगें भने तँ के गर्न सक्छेस् ? भन्दै मींगले केसरी हिकायो अनि त्यो अघिलागी।

ती पशुको कुरा बुझेर राजाले आफूलाई धिक्कार दिए—यो पशुभन्दा पनि म मूर्ख भएछु। यति विचार गर्दा भने—रानी ! घर हिंड, म अब उहीं तिमीलाई कुरा सुनाउँछु। अनि सबै जना घर आएपछि राजाले कोर्रा मगाएर रानीलाई धमाधम हिकाउन थाले र 'भयो अब म सुन्दिन' भनेपछि मन्त्रीलाई आज्ञा दिए—यसको नाक-कान काटेर शहरबाट धपाइदिनु। मन्त्रीले राजाज्ञाको पालन [illegible]। रानी आफ्नो दुष्कर्मको फल भोग्न लागिन्।

यो कथा सुनाइ सकेपछि सुगाले भन्यो—हे मैना ! स्त्री मात्रको कुनै विश्वास छैन। तिमी त अवगुणको पोको विचरी मसित के कुरा गर्न सक्छ्यौ ? अनि मैनाले भनी-बर्ता नबोल, मैले पनि पुरुषहरूको बेइमानीको कथा जानेको छु। अनि सुगाले भन्यो—हे मैना ! हामीले कथा भन्दा-भन्दै दुइ रात बितिसक्यो। अतः आजको रात विश्राम गरौं। भोलि तिम्रो कथा सुन्नेछु। यति भनी दुबै विश्राम गर्नलागे।

तोता-मैनाको कथा चौथो भाग सकियो ॥ ४ ॥

तोता मैनाको कथा

# पाँचौं भाग

## नवौं कथा मैनाको-

मैनाले भनी-हे सुगा ! भारतवर्षमै अत्यन्त शोभायमान इन्द्रप्रस्थ नामको यौटा नगर थियो । त्यहाँ चन्द्रगुप्त नामका राजा थिए । तिनका चार छोरा सबै सर्वगुण सम्पन्न, नवयुवक थिए । एक दिन ती चारै भाई आफ्आफ्ना घोडा चढी शिकार खेल्न गए । वनमा यौटा हरिण देखेर चारै भाईले लखेटे । तिनीहरूलाई आउन लागेको देख्नासाथ हरिण वनतिर भाग्यो । निकै पर पुगेपछि हरिण बेपत्ता भयो । तिनीहरूले सकेसम्म खोजे तर पाउन सकेनन् र हार मानी यौटा वृक्षमनि बसे । थकाइ लागेको र वनको शीतल हावाले गर्दा चारै भाई त्यहीं निदाए । रात बितेको पनि थाहा हुन सकेन । प्रातःकाल भएपछि फेरि घोडा चढेर हिंडे । दैवसंयोग घर जाने बाटो बिराएर अर्कै नगरको बाटो लागेछन् । यौटा नगरमा पुगेपछि कुवामा पानी भर्न लागेका स्त्रीहरूलाई देखेर यौटा राजकुमारले भने—

परदेशी हामीहरू लाग्यो प्यास अति।
पानी प्यायी धर्म लुट, कोही एक सती ॥

राजकुमारको कुरा सुनी यौटीले उत्तर दिई—

कूवाको मुख सांगुरो पानी देख्छु तलै।
भर्दा कम्मर बांगिने, दुख्ने देह सबै॥

राजकुमारले फेरि भने—हे सुन्दरी !

परदेशी अनि पाहुना, देश छ हाम्रो दूर।
तिर्खालु बुझि देउ जल, होला धर्म प्रचुर॥

अनि यी तिर्खाएका रहेछन् भनी पानी खान दिए र चारै भाई त्यहाँबाट बाटोलागे। निकै पर यौटा अर्को नगर देखियो। त्यहांका मानिसहरू जादू जान्ने रहेछन्। तिनीहरू नगरमा पसेर चारैतिर घुम्नलागे। पछि यौटी पौवाल्नीको धर्मशालामा विश्राम गर्न पुगे। त्यसै बखत पौवाल्नीकी कान्छी छोरीले देखी र मनमनै विचार गरी—यति राम्रा युवक हाम्रो पौवामा विश्राम गर्न आजसम्म आएका थिएनन्। अवश्य पनि यी कुनै देशका राजकुमारहरू हुन्। यति विचार गरेर आफ्ना दिदीहरूलाई भनी—दिदी हो, आज हाम्रा पौवा (विश्रामस्थल) मा अत्यन्त रूपवान् चार जना परदेशी आएका छन्। तिनी-हरूको सौन्दर्यको वर्णन गरेर साध्य छैन। कांछी बहिनीका त्यस्ता कुरा सुनी चारै बहिनी हेर्न आएर देख्नासाथ मोहित भई घर फर्केर आई परस्पर भन्न लागे—यी राजपुत्रहरू त

आनन्द भोग्ने र ऐश गर्ने लायक रहेछन् । यिनलाई वशमा पारेर एक-एक जना बांडौं र सुख भोग गरौंला । किनकि यस संसारमा यो सुख भोग बाहेक अरू आनन्द दिने वस्तु केही पनि छैन । यति सल्लाह गरी मन्त्र प्रयोग गरेर आफ्आफ्ना घरमा एक-एक जनालाई ल्याएर दिनभरि भेडा बनाई रातमा मानिस बनाएर सुख भोग गर्नलागे । केवल कांछी कांछा राजपुत्रलाई केही नबनाई उसैका साथमा प्रसस्त आनन्द भोग्न लागी । यही क्रममा केही दिन बित्यो । कांछी र कुमारको प्रेम प्रतिदिन बढ्दै गयो । एक दिन कुमारले आफ्ना माता-पितालाई सम्झी झोक्किएर बसिरहेका देखेर कांछीले सोधी— प्रियतम ! आज किन यस्तो विचारमग्न भएर बस्नुभएको ? हजुरको यो स्थिति देख्दा मेरो चित्त दुःखी हुन्छ । आफ्नू मनको कुरा बताउनु हवस् अनि म जो सकेको उपाय गर्नेछु । म तन-मनले हजुरकी दासी भइसकेकी हुनाले मसित मनका व्यथा लुकाउनु उचित छैन । कुमारले भने—हे प्रिये ? म पनि तिमीलाई तन-मनले माया गर्दछु । तर आज माता-पिताको सम्झना भएको हुनाले दिक्क लागेको हो । फेरि हामी चार भाई हौं, चारै जना यहां आएर अल्झियौं । फेरि यस संसारमा छोरो बाहेक प्रिय अरु केही हुंदैन । त्यसमा पनि तिनै दाजूहरूको त बिवाह पनि भइसकेको छ । तिनका रानीहरू कति दुःखी होलान् । यही सबै कुरा सम्झेर म दुःखी भएको हुँ ।

हे प्रिये ! यदि तिमी मलाई तन-मनले प्रेम गर्दछ्यौ भने मेरा दाजूहरू यस जालबाट मुक्त हुने कुनै उपाय गर। यदि तिम्रो इच्छा भए हामी पनि यहाँबाट जाऔँ। यहाँ तिमी पौवाल्नीकी छोरी भए पनि उहाँ त रानी कहिने छौ।

राजकुमारका यस्ता कुरा सुनी कांछीले विचार गरी—फसाद पऱ्यो। अब यिनका दाजूहरूलाई उम्काई दिउँ भने दिदीहरूलाई दुःख लाग्नेछ र मेरो वैरी बन्नेछन् न भगाइ दिउँ भने प्राणप्यारालाई कष्ट हुनेछ। यिनले खान-पान, सुत्नु-बस्नु सबै छाड्ने छन्। अतः यिनको यो कष्ट म सहन कदापि पनि सक्तिन। अतः जे भए पनि कुमारका दाजूहरूलाई यहाँबाट उम्काइदिन्छु। तर यी मलाई एक्लै छाडेर त जाँदैनन् पहिले यो कुराको निश्चय गर्नु आवश्यक छ। यति विचार गरेर भनी—हे नाथ ! हजुरको यही इच्छा छ भने म चारोटा गुटिका दिन्छु। एक-एक आफ्ना मुखमा राखेपछि कुनै पनि मन्त्र वा जादूको जोर चल्दैन। कांछीका यस्ता कुरा सुनी कुमारले विचार गरे—यो अवश्य पनि मेरो परीक्षा लिन आँटेकी हो, तर यो मौकाको फाइदा नलिने म मूर्ख होइन। पहिले दाजूहरूलाई यहाँबाट उम्काऊँ, अनि आफू उम्कने उपाय गर्नुपर्ला। फेरि मलाई कुनै पनि दुःख

कष्ट छैन । सबै तरहले आनन्द भोगिरहेको छु । अतः यो सित प्रेम बढाउनमा नै मेरो हित छ । यति विचार गरेर भने— प्रिये ! मलाई चार गुटिका दिन चाहियो, तीन जना दाजुभाई तीनओटा भए पुग्यो । यदि मलाई पनि दिने हो पनि तिमी पनि मसित जान तयार रह । तिमी बिना म यहाँबाट जान तयार छैन । अनि कांछीले भनी—'म अहिले हजुरसित जान सम्भव छैन । कुमारले भने—किन, म त तिम्रो दास भइसकेको छु र म एक्लै जान तयार छैन । यति सुनेपछि—यिनको म प्रति पक्का स्नेह रहेछ भन्ने निश्चय गरी बाकसबाट तीन गुटिका ल्याएर दिई र भनी—एक-एक दाजुहरूलाई दिनु, यो मुखमा राखेपछि कुनै पनि मन्त्र र जादूको ओर चल्दैन । अनि कुमारले भने—यो गुटिका मैले कसरी दिन सक्छु । तिम्रा दिदीहरू हरवखत हेरचाह गरिरहन्छन् । अनि कांछीले भनी—आजको एक सातापछि तिहारको पर्व आउँछ त्यसै दिन गुटिका दिने अवसर पर्दछ । त्यसपछि तिहार आयो र गुटिका लगेर दाजुहरूलाई दिए । त्यो मुखमा राख्नासाथ भेडाको रूप त्यागेर अघि जस्तै मानिस भए । अनि कांछा भाइले भने—अब तापाइँहरू यहाँबाट जानुहवस । कांछा भाइको कुरा सुनी तीनै जनाले भने—बाबू ! तिमी पनि हामीसितै हिंड, नभए हामीले मातालाई के मुख देखाउन ! यति सुनेर कांछा कुमा-

रले भने—हजुरहरू त यस जालबाट उम्कनोस् ईश्वरको इच्छा भयो भने म पनि छिट्टै नै आइपुग्नेछु। यति भाइका कुरा सुन्नासाथ केही सामान र बाटो खर्च लिएर ती तीनै जना त्यहाँबाट हिंडे।

एक छिनपछि तीनै जना दिदीहरू आए र आफाफ्ना भेडालाई नदेखी मुखामुख गरेर केही पत्ता नलागेको हुनाले कांछी बहिनीकहाँ हेर्न गएका त दुवै जना आनन्द मनाइ- रहेका देखेर रिसाई आफाफ्ना वीर डाकेर छोडे। ती वीर खोज्न गए तर गुटिका मुखमा हुनाले तिनको बल पुगेन र फर्केर आई सबै कुरा भनिदिए। अनि वीरका कुरा सुनेर कांछीकहाँ गई यो तेरै काम हो भनी बेसरी गाली गरेर भने— हेरौं, तेरो सुख कति दिन चल्दो रहेछ! तैंले यस मूर्खको कुरा सुनेर हाम्रो सुख हरण गरिस् तर यो असल काम गरिनस्। हाम्रो दाउ परेका दिन तँलाई काँचै खानेछौं यति भनेर घर गई आफाफ्ना वीर कांछीलाई मार्न भनेर छाडे। उसले पनि आफ्ना वीर छाडिदिई र दुवै थरिका वीरहरू लड्न लागे। त्यसपछि पनि अनेक जादूका युद्ध भए तर कांछीका वीरहरूले सबैलाई लखेटिदिए। त्यसपछि एक दिन कान्छीले भनी—प्रियतम! अब हामी दिदी-बहिनीको वैरत्व भयो, यस कारण कुनै दिन इनीहरूको फेला परेर मारिनु भन्दा यो स्थान नै त्यागिदिनु असल छ।

त्यागिदिनु त्यो स्थानलै, बैरी छन् जुन देश ।
अस्ता त्यो पुरमा सदा जाला प्राण समेत ॥

अतः अब यहाँ नबसौं । यस्तो सल्लाह गरी दुबै जना भएको माल-सामान र द्रव्य लिई त्यहांबाट भागे । निकै पर पुगेपछि यौटा नगरमा वास बसे । त्यहां रात परेपछि कांछी निदायी अनि राजकुमार विचार गर्नलागे—ईश्वरले यो मलाई पनि फुत्कने मौका दियो । अब यसको फन्दामा परिरहनु मूर्खता हो । फेरि यो अनेक जादू-टुना जान्दछे । कुनै दिन रिसाइ भने मलाई भेडो बनाएर फेरि लैजान पनि सक्छे । यसले दिएको गुटका पनि मसित छ, यसको जादूले पनि मलाई केही गर्न सक्तैन । बरू यसलाई यहीं मारेर गाडिदिए पनि हुन्छ तर यसले मेरो निकै रक्षा गरेको हुनाले मार्नु उचित छैन । यसै छाडेर गए पनि हानि छैन, यस्तो विचार गरेर भए भरको माल-सामान लिई कान्छीलाई सुतेकी छाडेर बाटो तताए । हे सुवा ! कान्छीले कुमारको कसरी रक्षा गरी र उनले त्योसँग कस्तो व्यवहार गरे ! त्यसैले पुरुषको विश्वास गर्न मन लाग्दैन ।

यता जब कान्छीले उठेर कुमारलाई देखिन तब निकै बेरसम्म बाटो हेरी तर उनी आएनन् अनि मनमनै विचार-गरी—त्यो पापी मलाई छाडेर भाग्यो । हे ईश्वर ! अब म के गरूँ, कहां जाऊँ ? कान्छी बाठी र जादू जान्ने भए पनि

त्यस बेला सबै बिर्सियो र लुगा गहना फालेर खरानी घसी योगिनीका भेष लिई कुमारको सम्झना गर्दै एकातिर हिंडी—

विरह वेदनाका अनेक गीत गाउँदै जांदै गर्दा यौटा साधुको कुटी देखियो। ती अली नजीकै पुगेपछि साधुले सोधे—'नानी! तिमी को हौ? तिमीलाई के विपत्ति पर्‍ेर यसरी रोइरहेकी छौ?' त्यति सुनेर कान्छीले भनी—हे महात्माजी! म आफ्नो हाल कसरी भनौं, मन्दा पनि छाती चिरिन्छ, तापनि सोधेपछि भन्न करै लाग्यो। सुन्नु होस्—

गए—त्यागि स्वामी म एक्ली भएँ।
बचें व्यर्थमा कष्ट पाईं मरें॥
मलाई त्यजे निष्ठुरीले वृथामा।
म रोई रहन्छु डुबी त्यै व्यथामा॥
कहाँ छन् म जान्दीन तिन्को पता।
जली देह भो राख मेरो यता॥
कहाँ छन् ति भन्नास् म जाऊँ त्यता।
म देख्छु अँध्यारो छ सारा दिशा॥

कान्छीको त्यस्तो हाल सुनी साधूले भने—नानी! विचार गर, यस संसारमा को कसको मित्र र को कसको शत्रु, सबै मिथ्या हुन्। मैले भनेको मानी यो मिथ्या विचार त्यागिदेऊ र ईश्वरको भजन गर। अर्को कुरा तिम्रो भनाइ छ मेरो प्रिय राजकुमार मलाई छाडेर गए। तर

तिमी जान्दीनौ राजा कसैका मित्र हुँदैनन् । कुनै कविले भनेका छन्---

राजा जोगी अग्नि जल इनको उल्टो रीति ।
क्षणमानै गुण बिर्सिई गर्छन् व्यर्थ अनीति ॥

यौटा राजाको तिमीलाई उदाहरण दिन्छु सुन---कुनै धर्मपुर नामको नगर थियो । त्यहां खगसेन राजा राज्य गर्दथे । तिनीकहां यौटा तन्दुक नामको सेवक थियो । राजाले बिश्वास गरेर उसलाई राज्यको सारा काम-काज सुम्पेका थिए । भोजन गर्दा पनि राजा त्यसलाई साथै राख्दथे । एक दिन राजाले भने---'हे तन्दुक ! आज मलाई कतै डुल्न जान मन लागिरहेछ तर यदि तिमी जाने भए मात्र जान्छु !' उसले जवाब दियो---'आज मेरो थुप्रै काम छ, यदि हजुरलाई जाने इच्छा भए जानुहवस् । त्यसका कुरा सुनेर राजालाई रिस उठ्यो र मनमनै सोचे---यो मूर्ख-लाई अभिमान भएछ, आज यसले मेरो आज्ञा मानेन, अब यसलाई राख्न हुन्न । यति सोचेर त्यसको सर्वस्व गरी मुखमा कालो पोतेर निकालिदिने आज्ञा दिए । तत्काल राजाज्ञाको पालन भयो । हेर नानी ! त्यसमा तन्दुकको के अपराध थियो, तर त्यसले सजाय पायो । अतः जान्ने मानिस राजासित कहिल्यै प्रीति राख्दैनन् । तिमी पनि मेले भनेको मानी यो व्यर्थको मोहमा परेर जाफ्नू जीवन

बरबाद नगर । साधुले यसरी निकै बुझाए तर पनि कान्छी-को मनमा एक कुरा पनि बसेन । सत्य—यो प्रेमको आगो लागे पछि जति उपचार गरे पनि आराम हुँदैन । अन्न भित्र भित्रै सल्कन्छ, धुवाँ पनि देखिन्न । अतः कसैले भनेको पनि छ—

लाग्यो जस्को देहमा कठिन प्रेमको बान ।
त्यो दुख सोही जान्दछ, जान्दैनन् अरू ज्ञान ॥
लाग्यो लाग्यो भन्दछन् लाग्नू हुन्छ खराब ।
लागेको जानिन्छ तब हृदय हुन्छ जब पार ॥
प्रेम-अग्निको हुन्न कहीं धुवाँ गुस्तो बाहिर ।
लागेको छ जस्कन, जान्दछ त्यसैले हाल ॥

मैनाले भनी—हे सुगा ! कुमारको विरहमा व्याकुल भएकी कांछी, साधुको कुटीबाट उठेर तिम्रो अशोक थरिका विरहका गीत गाउँदै हिड्दै आँदा केही दिनमा कुमारको नगरमा पुगी र भाग्यवशात्‌ सोनपुर गढी कान्छा राज-कुमार केसरा भएका थिए, भरसार आउदछ दिन भनी आएका छन्, तिनी यहीं केशर बागमा दिनहुँ डुल्न आउँछन् । कान्छीले त्यही मालिनसित केशरबागको बाटो सोधी, उहाँ गएर बागको मूल बाटोमा बसेर प्रियतमको बाटो हेर्न लागी । अब त प्रियतमसित भेट हुन्छ र मलाई किन त्यागेर आयौ भनी सोद्धछु—इत्यादि कल्पना गर्दै थिई,

त्यसै बेला राजकुमारको सवारी आयो र देख्नासाथ कान्छीले सोधी—हे नाथ ! मलाई सुतेको बेलामा किन छाडेर आउनु भयो ? म अनेक दुःख सहेर थल्ल-ल्ल यहाँ आइपुगें । अब हजुरकी दासी सेवामा हाजिर छ । कान्छीका त्यस्ता कुरा सुन्दा—यो डंकिनी त यहां पनि आइपुगी । अब यसले मसित साटो नफेरि मान्दिन । अहिले यसलाई धुनामा राख्न लगाऊँ, भोलि देखाजाला—यस्तो विचार गरेर—यस योगिनीलाई आज धुनामा राखी भोली दरबारमा हाजिर गराउनु भन्ने आज्ञा दिए । सिपाहीले तत्काल समातेर लगे । कान्छी कराउँदै थिई, तर राजकुमारले एक पनि सुनेनन् । भोलिपल्ट दरबार लागेपछि कान्छीलाई हाजिर गराए, कुमारले त्यसको विषयमा मन्त्रीलाई सबै कुरा सुनाए, अब यसलाई के सजाय दिने हो भनी सोधे । मन्त्रीले भने—यस्तै किसिमको म यौटा इतिहासको कथा हजुरलाई सुनाउँछु—

विराटनगरमा एक राजा थिए । तिनाकहां यौटा योगी बस्तथे । तिनी सबै शास्त्र र मन्त्र टुना पनि जान्दथे । एक दिन राजालाई निकै पर नगई नहुने काम आइलाग्यो, तर समय नहुनाले चिन्तामा थिए । त्यसै बेला योगी आएर राजाको स्थिति देखी सोधे आज किन चिन्तित हुनुभयो ? राजाले योगीलाई सबै कुरा यथार्थ बताएपछि योगीले भने—

यति जाबो कुरामा चिन्तित हुनु पर्दैन। आज मेरो प्रभाव हेर्नुहोला। बिहान नहुँदै म हजुरलाई इच्छित स्थानमा पुर्‍याइ दिन्छु। रात परेपछि योगीले आफ्ना वीरलाई डाकेर भने---राजालाई उनले इच्छा गरेको स्थानमा लगेर आउने मन गरेपछि लिएर आउनु। वीरले योगीको आज्ञानुसार राजालाई लगेर फेरि नगरमा ल्याइदिए। यो चमत्कार देखेर राजाले विचार गरे---यो योगी त डरलाग्दो मानिस रहेछ, कुनै दिन मसित रिसायो भने मलाई यहांबाट उडाएर जहां पनि लेजान सक्तछ। अतः यसलाई राख्न हुँदैन भनी फांसीको आज्ञा दिए। हे कुमार! मेरो विचारमा त यसलाई पनि फांसीकै सजाय दिनु उचित छ। नभए कुनै दिन यो रिसाइ भने हजुरको हानि गर्न सक्तछ। मैले आफ्नू विचार सुनाएँ, अब हजुरको जो इच्छा! त्यसपछि राजकुमारले कांछीलाई फांसी दिने आज्ञा दिए। मैनाले भनी---हे सुगा कान्छीले राजकुमारको ... परी भलो गरी र त्यसको फल कति नमिठो पाई। यसैले म पुरुष जातिको विश्वास गर्दिन। अनि सुगाले भन्यो---पुरुषलाई पशु बनाउन सक्ने नारीलाई मारेर पाप लाग्दैन। यो कथा त मैले सुनाउनु पर्ने थियो, तिमीले सुनायौ उल्टो भयो। अब म यौटा स्त्रीको कथा भन्दछु; ध्यान दिए सुन---



## दसौं कथा सुगाको—

उज्जयिनी नगरीमा उग्रसेन नामका उपकारी धर्मात्मा र न्यायी राजा राज्य गर्दथे। तिनका राज्यमा सोका-नांगा कोही थिएन। ती राजाकहाँ एउटा ब्राह्मण नोकरी गर्दथे, तर राजासित कुनै पनि सेवा लिंदैनथे। तलब चाहीं बर्सै पठाइदिन्थे। तिनकी यौटी सुशीला र पतिव्रता पत्नी थिइन्। राजाले दिएको तलब खाएर बस्ता-बस्तै ब्राहुन बाजे बूढा भए। अनि एक दिन आफ्नी स्त्रीसित भने— साथी! हामीले राजाका पैसा खाएर बसेका अनेक वर्ष भयो, तर आजसम्म राजाले कुनै सेवा लिएका छैनन्। अब यस ऋणबाट हामी कसरी पारिजानें? अब म गएर राजालाई—मसित कुनै सेवा गराऊ अनि म तिम्रो ऋणबाट मुक्त हुन्छु, भन्न जान्छु। यति सबै कुरा तिनले गएर राजालाई बिन्ती गरे। ब्राह्मणको बात सुनेर राजाले भने—हे विप्रदेव! मैले ब्राह्मणसित सेवा गराउने छैन भन्ने प्रतिज्ञा गरेको छु। तपाईं इच्छा भए मेरो निम्ति काशी गएर गंगास्नान गरी यौटा शीशीमा गंगाजल लिएर आउनुहोस् मेरो निम्ति यही सेवा हुनेछ। राजाको आज्ञा सुनेर प्रसन्न भएका ती विप्र घर आएर पत्नीलाई सबै कुरा सुनाएपछि उनले भनिन्—नाथ! हजुर जानु भएपछि म हजुरको दर्शन नगरी नखाने नियम भएकीले के गर्नें? मात अन्न-

जल बिना त्यसै मर्नेछु। ब्राह्मणले भने—'प्रिये! म आफ्नू मूर्ति भित्तामा लेखिदिन्छु। तिमी त्यसैको दर्शन गरेर सब काम चलाउनु।' पत्नीले स्वीकार गरेपछि भित्तामा आफ्नू मूर्ति लेखिदिएर लोटा डोरीलिई राजाकहाँ गएर भने—राजन्! मेरी पत्नीको हेर-चाह गरिदिनु हola। त्यो हजुरको शरणमा छ। यति भनी बाटो खर्च लिएर हिंडे। ब्राह्मण गएपछि दिनको एक पल्ट राजा ब्राह्मणको घर जानथाले। एक दिन तिनको छिमेकमा आगो लाग्यो। निभाउने प्रयत्न गर्दा गर्दै बाहुनीको घरसम्म आइपुग्यो। त्यो देखेर बाहुनी बजै पतिको मूर्तिसित हात जोरेर भन्न लागिन्—हे स्वामी! घरमा आगो लाग्यो, हजुर बाहिर निस्कनुहोस्। यसरी धेरैपल्ट बिन्ती गर्दा पनि मूर्ति हिंडेन तब त्यही मूर्तिमा टाँसिएर बाहुनी बजैले पनि प्राण त्यागिन्। केही बेरपछि राजाले खबर पाएर आउँदा त ब्राह्मणी मरिसकेकी देखेर विचार गरे—यो त गजब भयो! बाहुनी मरिन्, अब बाहुनले सोधेपछि मैले के उत्तर दिने? इत्यादि तर्क गर्दै महलमा आए संयोगले बाहुन बाजे पनि गंगा-स्नान गरेर आइपुगे। तिनले घर डढेको र स्त्री मरेको सुनेपछि—मैले राजालाई मेरी स्त्रीको हेरचाह गरिदिनु भनेको थिएँ, तर राजाले ख्याल नगरेर मरी। राजाहरू यस्तै अभिमानी हुन्छन्। अब म राजालाई श्राप दिन्छु—यस्तो विचार

गरेर राजाकहाँ पुगी रानीले झनक्क भएर भने—राजन् ! मेरी पत्नी कहाँ छ ? तिमीले उसको हेर-विचार गरेको भए त्यो कदापि मर्ने थिइन। राजाले भने—देवता ! म ब्राह्मणकी उत्तम कन्या खोजेर तपाईंको विवाह गरिदिन्छु। यस्तै धेरै बुझाए तर ब्राहुनले मानेनन् अनि राजाले फेरि भने—उसो भए एक महीनासम्म तिनको शरीर तेलमा हालेर राख्नु म तिनीलाई जीवित पार्ने काममा जान्छु।' यति भनेर राजा सबै काम मन्त्रीलाई सुम्पेर अमृत खोज्न हिंडे।

जाँदा-जाँदा तिनी याँटा गाउँमा पुगे। त्यहाँ कुनै एक ठकुरीको घर बाहिर छाप्रो हालेको चौतारो रहेछ, थाकेका राजा त्यहीं बसे। त्यस घरमा सासु-बुहारी दुइजना बस्तथे। ती बुढीको छोरो निकै दिनदेखि बेपत्ता भएको थियो। एक छिनपछि बुहारी कुनै कामले बाहिर आई र राजालाई बसेको देखि र मनमा-मेरो पति यिनै हुन्, यिनको रूप-रंग पनि उस्तै छ—यस्तो तर्क गरी सासुसित भनी—बज्यै ! बाहिर हजुर-का छोरा आएर बसे जस्तो लागिरहेछ मलाई। बुहारीको कुरा सुनी बुढी दगुर्दै बाहिर आइन् राजालाई—आफ्नू हराए-को छोरो जस्तै देखेर अंकमाल गरी भन्न लागी—बाबू ! यतिका दिन कहाँ गएका थियौ ? तेरो सम्झनाले म गलि-सकें। तिमीले मलाइ बिर्सिसियौ भन्दै रुन लागी। राजा विचार्न लागे—हे ईश्वर ! यो के आपत्ति आइलाग्यो ! अनि

केही धैर्य धारण गरेर भने –'आमै ! म तिम्रो छोरा त होइन, तर आफ्नू छोराको सबै हाल बताऊ, अनि म तिम्रा-सित भेट गराउने उपाय गर्नेछु। बुढीले भनिन्—'मेरा छोरो बाह्र वर्षको उमेरमा बिहे गरेर बेपत्ता भएको बाह्र वर्ष भयो, उसकी स्वास्नी त्यसैको चिन्तामा सुकिरहेकी छ। अनि राजाले सोधे 'तिमीलाई त्यो फलानो ठाउँमा छ अथवा फलानो स्थानमा त्योसित भेट हुन सक्दछ भन्ने थाहा छ ? बुढले भनी—मैले सुनेकी छु—यहाँबाट दक्षिणतर्फ वीरसेन भन्ने कुनै राजा छन्। तिनैको चाकरी गरेर बसेको छ र त्यसको नाम दुर्जन हो। राजाले भने—आमै ! तिमी चिन्ता नगर। ईश्वरको कृपाले तिम्रो छोरासित छिटै भेट हुनेछ। यति भनेर राजा त्यहाँबाट हिंडे। रात परेपछि आफ्ना वीरको सम्झना गर्नासाथ हाजिर भए, अनि राजाले वीरसेनको नगरमा पुऱ्याइदेओ भनी आज्ञा दिनासाथ जुरुक्क बोकेर वीरसेनको नगरमा पुऱ्याई बिदा भए। राजा सोध-पूछ गर्दै वीरसेनको ढोकामा पुगे र ढोकेलाई 'तिम्रो घरबाट एक जना मानिस भेट्न आएका छन्' भन्न पठाए। ढोके गएर समाचार सुनायो र दुर्जन बाहिर आई राजालाई गाउँको मानिस ठानेर डेरामा लग्यो। अनि राजाले भने—हे भाई ! तिमी यहाँ आएदेखि घर गएका छैनौ, यो असल

कुरा होइन । तिम्रो चिन्तामा आमा र स्वास्नी डुलेर दिन बिताइरहेका छन् । दुर्जनले उत्तर दियो—सुन साईं ! म पराधीन छु । राजाले बिदा नदिई म कसरी जान सक्दछु । फेरि मेरो राजीनामा लिन पनि तयार छैनन् । अब म कसरी घर जाने ? अनि राजाले भने—दुर्जन ! तिमी आफ्नू स्थानमा मलाई नोकरीमा राखेर घर जाऊ । यति सुनेर राजाकहाँ गई दुर्जनले भन्यो—सरकार ! मेरो घरबाट मानिस आया र भन्दछु मेरो स्थानमा उसले नोकरी गर्दछ, म घर जान्छु । राजाले भने—त्यो मानिसलाई यहाँ ल्याएर राख अनि एक महीनाको बिदामा जाऊ । दुर्जन घर आएर राजालाई साथमा लगी सबै कुरा सिकाई बैठकको नोकरीमा राखेर आफू घर गयो ।

सुगाले भन्यो—हे मैना ! पुरुष अनेका कस्ता साहसी र धीर हुँदा रहेछन् राजा भएर पनि अर्काको निमित्त नोकरी गर्न लागे । ती राजा वीरसेन नित्य आधा रातमा उठेर नगर बाहिरको देवी मन्दिरमा जान्थे । ती राजालाई पाकि-रहेको तेलको कराहीमा हालिदिन्थिन् र मुटिएपछि झिकेर खान्थिन् पछि हाड जम्मा पारी अमृत छर्केर बचाउँथिन् अनि आफ्नू अक्षय आशीर्वाद सवा मन सुन दिन्थिन् । त्यही धन राजा दिनहुँ ब्राह्मण र दरिद्रहरूमा बाँड्थे । एक दिन

राजा विक्रमको मनमा आयो —यी राजा प्रतिदिन सुन कहाँ बाट ल्याउँछन् यसको भेद अवश्य जान्नु पर्‍यो। यस्तो निश्चय गरेर आधा रातमा जब राजा उठेर हिंडे, तब ऊ पनि सुटुक्क पछिलागे। मन्दिरमा लुकेर सबै कुरा प्रत्यक्ष देखे! अनि राजा भन्दा पहिले नै घर आई—राजा त ठूलो कष्टले सुन प्राप्त गर्दा रहेछन्। इनको कष्ट अवश्य हटाउनु पर्छ भन्ने विचार गरी अर्को दिन अनेक किसिमका मसला मेवाको व्यवस्था गरी आफ्नु अंग चिरेर ती सबै सामान छाला भित्र हाली आधा रात भएपछि आफ्ना वीर-लाई डाकी प्रातः काल नभएसम्म राजालाई थिचिराख्नू, उठ्न नदिनु भनेर आफू सरासर देवीको मन्दिरमा गए। नित्य झैं देवीले कराहीमा हाली पाकेपछि झिकेर खाइन्। त्यसदिन देवीलाई मासु अत्यन्त स्वादिष्ट लाग्यो र अमृत छर्केर जीवित पारेपछि राजालाई भनिन्—हे राजन्! आज म तिमीदेखि प्रसन्न छु। जे इच्छा छ माग तब राजाले नम्रता-पूर्वक यसरी बिन्ती गरे—पहिले त म अमृतको भाँडो माग्दछु, अनि अक्षय थैलो दिनुहवस्। देवीले दुवै थोक दिइ पछि उनले सोचे—यदि राजा वीरसेन यहाँ आएर देवीले खाइन् भने फेरि बचाउन सक्दिनन्। त्यसैमा तिनको ध्यान जानेछ, यस्तो विचार गरी भने—हे देवी! अब हजुर यहाँ बाट जानुहवस्। यति सुनी देवी त्यहाँबाट अन्तर्धान भइन्।

विक्रमले त्यो कराही घोप्टो पारिदिए र आफ्नू स्थानमा आएर बसे, तिनका वीरहरूले राजा वीरसेनलाई छाडिदिए। राजा हडबडाएर मन्दिरतिर दगुरे। वहाँ पुगेर हेर्दा त देवी छैनन्, कराही पनि घोप्टिएको छ। अनि विचार गरे—आज मैले सुन कहाँबाट ल्याएर बाँड्ने ? मेरो ठूलो उपहास वा बदनामी हुनेछ। राजाको ढुकुटी रित्तियो पनि भन्ने छन् इत्यादि चिन्तना गर्दै फर्केर आए। प्रातः भयो, बन्दीजन राजाको कीर्ति गान गर्न लागे। भिक्षुकहरू आएर—महाराज ! पुण्यकाल भयो। अब हजुर दान दिने चौतरामा बसेर हामीलाई प्रसन्न तुल्याउनु हवस् भन्न लागे। भिक्षुकहरूको स्वर सुनेर राजा झन चिन्तित भए। राजाको मुद्रा देखेर विक्रमले हात जोरी भने—महाराज ! आज हजुर किन चिन्तित हुनुभयो ? स्नान-दान किन गर्नुहुन्न ? उनले भने—म आफ्नू चिन्ताको हाल तिमीलाई के सुनाऊँ। मेरो हृदयमा जस्तो भइरहेछ त्यो कसैलाई सुनाएर पनि लाभ छैन। विक्रमले भने—महाराज ! म हजुरको सेवक भएपछि सबै तरहको सुख दुःखको साथी हुँ। मैले सकेसम्म हजुरको यो चिन्ता हटाउने उपाय गर्नेछु। इति सुनी राजाले सुन प्राप्त गर्ने सारा स्थिति सुनाए र फेरि भने—यी ब्राह्मण, याचकहरू द्वारबाट रित्तै फर्के भने मलाई कस्तो अपराध लाग्ला—महाराज ! यति जाबो कुरामा यसरी किन

चिन्तित हुनुहुन्छ? हजुर स्नान-ध्यान गर्नुहवस्। ईश्वरले अवश्य भलो गर्नेछन्। तिनको कुरा सुनी राजाले स्नान ध्यान गरेर आए अनि विक्रमले अक्षय थैलो दिएर भने—राजन्! पहिले हजुर ठूलो कष्ट भोगेर सुन ल्याउनु हुन्थ्यो, अब यस थैलोबाट सहजै सुन प्राप्त गरेर दान-धर्म गर्नुहवस। तिनको कुरा र थैलो देखेर वीरसेनले भने—यो थैलो कहाँबाट पायौ? र तिमी को हौ? सत्य कुरा भन।

अनि उनले भने—म उज्जयिनीको राजा विक्रम हुँ। म यौटा ब्राह्मणको लागि अमृत लिन हिंडेको थिएँ, त्यो मलाई प्राप्त भयो। अब हजुरको आज्ञा पाए आफ्नू नगरमा जाने थिएँ। त्यति सुनेपछि वीरसेन तिनको पाउमा परी भन्न-लागे—हजुरको साहस र शक्तिलाई धन्यवाद छ! हजुरको विषयमा जस्तो सुनेथें, प्रत्यक्ष देखें। मेरो ठूलो दुःख टारि दिनु भयो, इत्यादि गुण-गान गरेर विदा दिए। अनि विक्रमले आफ्मा वीरहरूलाई सम्झेर तिनले तत्काल उज्ज-यिनी ल्याइदिए। सुगाले भन्यो—हेर मैना! पुरुषको बराबर वचनको पक्का नारी कहिल्यै हुन सक्तैनन्। विक्रमले बुढिको छोरो पनि घर पठाइदिए। आफू पनि अमृत लिएर आए।

त्यसपछि बाहुनलाई डाकेर तिनकी पत्नीको सुरक्षित राखिएको लाशमा अमृत छर्केर जीवित पारिदिए, ती पहिले

मन्दा पनि राम्री र तरुणी भइन्। अब पनि वृद्ध भए, र तीलाई भोगमा सन्तुष्ट पार्न सक्तैनथे। अतः तिनी कामले पीडित भइन् र बलवान पुरुषको इच्छा गर्न लागिन्। हरिदत्त नामको एक बाहुन तिनको छिमेकी थिए। तिनी राम्रा र युवा पनि हुनाले ती दुवैको काम कुरा मिल्यो। ती दुवैले भोग-विलास गर्दा गर्दै ती बाहुनी गर्भिणी भइन्। त्यो थाहा पाएर पतिले बेसरी चुटे। ती बाहुनीले पतिलाई विष दिएर मारिन्। अनि हरिदत्तसित अर्कै नगरमा गइन्। समय भएपछि छोरो भयो। केही वर्षमा त्यो छोरो अलि जान्ने बुझ्ने भएपछि हरिदत्त केही नीजि कामले अन्तै गएको मौकामा ती बाहुनीलाई कामदेवले सतायो। त्यही गल्लीमा मोटा सिपाही रमन घुम्न आउँथ्यो। तिनका त्यौसित आँखा जुधे। अब तिनी उनैसँग भोग विलासमा लिप्त भइन्। एक दिन छोरोले तिनको चाला देख्यो र भन्यो---म यो कुरा पितासित र छिमेकीहरूलाई पनि सुनाइ दिन्छु। छोरोको कुरा सुनेर कामदेवले अन्धी भएकी ती बाहुनीले छोरोको हात समाई कोठामा लगेर मुखमा बुजो लगाई त्यही सिपाहीको सहायताले मारेर त्यहीं गाडिदिइन् अनि ती दुवै भोगमा लिप्त भए। केही दिनपछि हरिदत्त घर आए। छोरो मरेको सुनेर खूब दुःखी भए। एक दिन हरिदत्त बाहिर गएको मौकामा सिपाही आयो र दुवैले

आनन्द मनाइसके पछि बाहुनीले भनिन्—प्यारे ! अब म तमीलाई एक दिन छोड्न पनि तयार छैन, त्यो मेरा हर बखत घरमै रहन्छ। सिपाहीले भन्यो—त्यसलाई मार अनि हामी दुवैको यो प्रेम आनन्दले चलिरहने छ। दैवसंयोग त्यसैबेला हरिदत्त पनि आइपुगे र सिपाहीलाई घरमा देखी मार्न तयार भयो, तब बाहुनीले हात समाइदिइन्। त्यही मौका छोपेर सिपाहीले हरिदत्तको घाँटी छिनिदियो। सुगाले भन्यो—मैना ! सुन्यौ स्त्रीको निर्दयता। कामदेवको वशमा परेर पति, पुत्र र जारलाई समेत मार्ने सक्ने स्त्री-जातिको पनि तिमी बखान गर्दैछ्यौ र पुरुषलाई नजाती भन्दैछ्यौ। मैनाले भनी—हे सुगा ! तिमी धेरै नडेर कुरा नगर म तिमीलाई पुरुषको निर्दयताको कथा सुनाउँछु।

सुगा-मैना कथाको पाँचौं भाग सकियो ॥ ५ ॥

—०—

# तोता मैनाको कथा

# छैठौं भाग

## एधारौं कथा मैनाको—

मैनाले भनी—हे सुगा ! यौटा कमलपुर भन्ने शहर थियो, त्यहाँ चन्द्रकेतु नामका राजा थिए। त्यहीं शहरमा यौटा सेठ थियो, त्यसकी यौटी अत्यन्त रूपवती छोरी थिई। त्यस सेठले सानै उमेरमा वीरभद्र देशका यौटा सेठको छोरा-सित छोरीको बिहे गरिदिएका थिए। छोरी तरुणी भई; अब पुरुषको इच्छा हुन लाग्यो र कुनै लायक पुरुषको खोजीमा थिई। संयोगले त्यहीं यौटा जौहरीको छोरो निकै राम्रो पसलया बस्तथ्यो। एक दिन सेठकी छोरीका नजर त्यो जौहरीको छोरोमाथि पर्‍यो र त्यसप्रति आकर्षित भई उतातिर केटो पनि मोहित भयो। अब दुवैको देखादेखले मात्र चित्त नबुझ्ने भयो। अनि सेठकी छोरीले यौटा पत्र लेखेर नोकरनीको हात उस कहाँ पठाई—त्यसमा लेखिएको थियो—

अम्बा आँप भयो तयार रूखमा, पाकेर राम्रो गरी ।
माली क्वै नहुँदा सुकेर रुखमै झर्ला कि भन्दै डरी ॥
लेख्रेकी तिमीलाई यो वखतमा, लज्जा नमानी कन ।
यस्को उत्तर देउ जे छ मनमा, सोचेर मेरा धन ॥

यो श्लोक पढेर जौहरी-पुत्रले पनि यस्तो लेखेर दियो-

पाकेका फळको रस, भ्रमर बनी चाख्ने थिएँ ।
तिम्रो भाव बुझ्न नसकी, लाचारी आफैं बनें ॥

सेठकी छोरीले फेरि लेखेर पठाई—

ख्यालको बाटो गरी आए हे दिलदार ।
डोरी खसाली दिन्छु म, रहे खूब होशियार ॥
हेर्नेछु बाटो स्वयं, जागी सारा रात ।
गर्नेछौं सुखभोग बसी, हामी दौटै साथ ॥

जौहरीको छोरो प्रसन्न भएर उत्तर दियो—

आउने छु म रातमा रहे तिमी होशियार ।
मौकामा डोरी स्वयं, झारे राखि तयार ॥

यस्तो उत्तर पढी सेठकी छोरी भोह श्रृङ्गार गरेर उसको बाटो हेर्न लागी आधी रात भएपछि जौहरीको छोरो आयो र उसले डोरी खसाली, त्यसैद्वारा कोठामा पुग्यो । अब दुवैको मिलन भयो र बिहान चार बजेसम्म मनको वेग शान्त पारे । अनि जौहरीको छोरोले भयो—प्रिय ! हाम्रो यो प्रेम टुट्न नपाओस् । यसै गरी सुख भोग गरिरहौंला । अब म जान्छु भनी जान लाग्यो, तब सेठकी छोरीले

भनी—प्रियतम ? म त हजुरकी भइसकें, मन वचनले पति भनिसकें। त्यसका कुरा सुनी जौहरीको छोरो प्रसन्न मनले घर गयो। अब तिनी दुवैको यो क्रम चल्न थाल्यो। केही दिनमै आमाले थाहा पाइन् र छोरीलाई भनिन्—

गरीनौ काम यो राम्रो, हे छोरी तिमीले।
दुर्नाम फैलला यस्ले, सक्छ बिग्रन जीवन ॥
सुने पिताले यो बात, के भन्नन् तिमिनै भन।
फैलला जब यो चर्चा, होला जर्जर यो तन ॥

आमाले भनेको सुनी छोरीले निर्धक्क भई उत्तर दिई—

आयो मत्त भएर यौवन स्वयं, आफै नडाके पनि।
लाग्यो घायल देह कामशरले, मौका छ राम्रो भनी ॥
मेरो प्रेम बस्यो—बस्यो अब कसै, सक्दैन यो बिर्सन।
गर्छन् बात अनेर लोकहरूले, डग्दैन मेरो मन ॥
आज्ञा हुन्छ जती अरु सब कुरा; छु साक्नमा तत्पर।
साक्नु आफ भलाइ यो जिवनमा, लाग्दैन केही कर ॥
आफ्नो यौवनमा! कती हजुरले गर्नु भयो उपकार्।
मेरो प्रेम कुबेर तुल्य ; सबले झैं मा यो भलाई किन्दैनु ॥

छोरीको त्यस्ता कुरा सुनी आमाले अनेक किसिमले सम्झाइन् तर छोरीले उत्तर नदिइन् पनि आफ्नो बानी छाड्न सकिनन्। अनि आमाले हार मानेर आफ्ना पति सेठसित भनिन्—स्वामी ! बढेकी छोरीलाई घरमा राख्नु उचित छैन। अतः ज्वाईलाई डाकेर पठाइदिनु पर्दछ। सेठको

पनि चित्त बुझ्यो र ज्वाइँलाई––हामीहरू तीर्थ जाँदैछौं, फर्कने टेगान छैन, अतः आएर छोरी बिदा गराई लैजानु हवस्––भन्ने चिठी लेखेर पठाए। त्यो चिठी पाएपछि ज्वाइँ पनि आइपुगे। सेठले खूब स्वागत सत्कार गरे। रात परेपछि ऊ आफ्नो कोठामा सुत्न गयो। एक छिन कुराकानी गरेर लोग्ने सुत्यो अनि स्वास्नी बिस्तारै उठेर जौहरीको छोरोकहाँ पुगी। यता सेठको छोराको सहसा निद्रा खुल्यो र स्वास्नीलाई बिछौनामा नदेखी त्यसको चरित्रमा शंका गरी सुतिरह्यो। भोलिपल्ट निदाए झैं गरेर सुत्यो। उसले लोग्ने निदायो भन्ने ठानेर उठेर हिंडी र जारकहाँ पुगेर आनन्द मनाउन लागी। यता जौहरीको छोरो चियो गर्दै आएको थियो र घर देखेपछि तत्काल योटा योगीको भेष बनाई उही घरको ढोकामा गएर––नारायण! नारायण! दिनभरिको भोको छु। आज केही पनि पाइएन। केही खाने कुरा दिनुहुन्छ कि भनेर आएको।' योगीको स्वर सुनेर जौहरीको छोराले सेठकी छोरीलाई भन्यो––'प्रिये! रातको बखतमा कुनै योगी माग्न आइरहेछ। अलिकति मोति लगेर तिमीनै दिएर आऊ र हाम्रो दिन यसै गरी बितिरहोस् भन्ने आशिष माग।' आफ्नो प्रियको त्यस्ता कुरा सुनी अंजुलीमा मोति लिएर बाहिर आई सेठकी छोरीले भनिन्–– 'योगीराज! आफ्ना पतिको आज्ञाले मोति ल्याएकी छु, लिनु,

होस् ?' योगीले भने—'यो पत्थरका दाना मलाई के काम लाग्दछ ! दिन मन भए घाँटीको माला देऊ ।' सेठकी छोरीले आफ्नू घाँटीको माला भिकेर दिइन्, अनि योगीले—'तिमी दुवैको भगवान्ले इच्छा पूरा गरुन्' भन्दै त्यहाँबाट हिंडेर घरमा गई आराम गर्न लागे । अनि ऊ पनि यारसित मोज गरी बिहानीपख घरमा आएर लोग्नेको पासमा सुतिन् ।

बिहान भएपछि जौहरीको छोरोले सासुसित बिदा मागे । उनीहरूले पनि सकेको दाइजो दिएर ज्वाईं-छोरी बिदा गरे । त्यहाँबाट दुइ दिनको बाटो हिंडिसकेपछि योटा बनमा बास पर्‍यो । त्यहाँ खान-पिन गरी दुवैजना बसेपछि जौहरीको छोरोले पत्नीसित सोध्यो—'प्रिये ! आज तिम्रो घाँटीमा माला छैन किन हो ?' उसले भनी—'त्यो माला छिनेर बनाउन जौहरीकहाँ दिएको छु' त्यति सुन्नासाथ खल्तीबाट माला झिकेर—तिम्रो मोतिको माला यही होइन् ? हेर त । त्यो माला देख्नासाथ उसको सातो गयो । मुख रातो भएर आयो । अब दिनले मलाई नमारी छाड्दैनन् । यस्तो निश्चय गरेर नारी-चरित्र फिंजाई भनिन्—स्वामी ! दासीको अपराध क्षमा गरिबक्सियोस् । अब यस्तो अपराध गर्नेछैन् । पत्नीको यस्तो बात सुनी भेडो भइसकेको उसले भन्यो—संसारमा हावा नलागेको वृक्ष कुन होला ! जो भयो त्यो भयो । अब यस्तो काम नगरे । मानिनी भने

त्यसको फल भोग्नु पर्नेछ। सुगाले भन्यो—मैना! पुरुष मनेको कस्ता उदार हुन्छन्। स्वास्नीको अपराध उसले सहजै माफ गरिदियो। त्यसपछि दुवैजना घर आएर सुखपूर्वक बस्न लागे। त्यो स्त्री पतिका घर आएर पनि जार पतिको स्नेह बिर्सन सकीन। मनमनै भन्दथी—म बिना मेरा प्रियतमको हे ईश्वर! के गति भएको होला। इत्यादि। उता जौहरीको छोरो पनि आफनी प्रियतमा उसको लोग्नेसित बिदा भएर गएदेखि बौलाहा जस्तै भएर छटपटाइरहेको थियो। दिन-रात हे प्रभु! कस्तो वियोगरूपी आगोमा यसरी डढाइरहेका छौ। भन्दै घरी-घरी लामो सास फेर्दथ्यो। छोराको चाला देखेर एक दिन वैद्य डाकेर हेर्न लगाए। वैद्यले नाडी छुनासाथ रोगीले भन्यो—'हे वैद्यजी! मेरो रोग हटाउने औषधि तपाईंसित छैन। आफ्नू घर जानुहवस्।' तिनको कुरा सुनेर वैद्यले आमा बाबुलाई भने—तिम्रो छोरोलाई कुनै रोग छैन। यो काही स्त्रीमा आसक्त भएको छ, त्यो स्त्री नपाई रोग शान्त हुँदैन। यति भनेर वैद्य घर गए। अनि उसकी आमा आएर भनी—

बाबू! कष्ट छ के बताउ मनको, सन्ताप आफ्नू अब।
गर्नेछु म उपाय निश्चय बुझे, जाने बुझेको सब॥

आमाको कुरा सुनी छोराले भन्यो—

हीरा एक थियो निकै सुख दिने, त्यो हात देखी गयो।
सोही कारणले दुखी हुन गएँ, यो हाल मेरो भयो॥

आमाले भनी--

हीरा एक गयो भनेर मनमा चिन्ता लिएको किन ।
दिन्छु रत्न अनेक लेउ, घरमा, धेरै थरी छन् धन ।।

छोरोले भन्यो--

जुन हीरा अनमोल यो हृदयमा, मेरो छ ऐना सरी ।
अर्को छैन कहीं पनी नजरमा, खोजौं कहाँ के गरी ।।
त्यो हीरा अहिले जहाँ छ उहिं नै, जानेछु इच्छा अब ।
योगी रूप लिएर हिंड्दछु छिटै, सर्वस्व त्यागी सब ।।

आमाले भनी---

हे बाबू ! तिमी छौ प्रवीण चतुरा, यो मूर्ख जस्तो गरी ।
जाँदैछौ पर-पत्नि खातिर वृथा, यो ज्यान जाला मरी ।।
स्त्रीके निमित्त अनेक व्यक्तिहरूले, आफ्नो दिए जीवन ।
दिन्छु माग बरु समस्त घरको, जो-जो छ सारा धन ।।

आमाले सकेसम्म बुझाई तर उसको चित्तमा योटा कुरा पनि बसेन । कसैले भनेको पनि छ--'कामातुराणां न भयं न लज्जा ।' कामी पुरुषलाई डर पनि हुन्न र लाज पनि लाग्दैन । सुगाले भन्यो--हे मैना ! त्यस जौहरीको पुत्रको योटा मन्त्रीको छोरासित मित्रता थियो । उसले यी कुरा सुनेर भेट्न आयो र भन्यो---मित्र ! तिमीलाई के भयो ! तब जौहरीको पुत्रले सकेसम्म बुझायो तर ऊ मानेन र ऊ बर भयो । अनि जौहरीको छोरो केही खर्च लिएर बाटो लाग्यो ।

योगीको भेष लिएर जाँदा केही दिनपछि कही बनियाँको

छोरी भएको नगरमा पुग्यो, तर उसलाई थाहा थिएन कि मेरो प्रियतमा यहीं छन् । तापनि हार मानेर यौटा पोखरीको डिल-मा डेरा जमायो र भेट हुने आशारूपी डोरीमा अल्झियो। त्यसको मनमा विचार आयो—यहाँ सबै स्त्री-पुरुष स्नान गर्न आउँछन्, अतः मेरी प्रियतमा पनि कुनै दिन अवश्य आउने छन्—यदि ती यहीं भए।

दैवसंयोगले एक दिन सेठको छोरी पनि त्यहीं स्नान गर्न आई र उनले देख्नासाथ प्रियतमालाई चिनेर भन्नलागे—

आएँ कष्ट ठुलो सहेर म यहाँ, घुम्टो हटाई कन।
देऊ दर्शन प्रेमले अब प्रिये ! आनन्द मान्छा मन ॥
तिम्रै निम्ति त्यजे समस्त घरको, व्यापार आफ्नू धन।
घुम्दैछू दिनहूँ म पागल सरी, आफ्नू बनाई तन ॥

योगीको वचन सुनी पुराना प्रियतम चिन्ही—यी योगी ती मेरा प्रीतम पो रहेछन्, असल भयो भन्ने विचारी अलि नगीचै गएर घुम्टो हटाई भन्दछिन्—

हाम्रो जुन दिनमा बिछोड हुनगो, दुःखी म छू बेसरी।
पानी बाहिर मत्स्य हुन्छ जसरी, त्यस्तै भएँ यो घरी ॥
निद्रा भोक मलाइ छैन रुचि क्यै, नाना थरी भोगमा।
सम्झन्छु तिमीलाई नै हरघरी, आफ्नो दुःखी चित्तमा ॥

प्रियतमाको त्यस्तो कुरा सुनी जौहरीको छोराले भन्यो—'हे सुन्दरी ! अब तिम्रो जे मर्जी छ, त्यही गर्न यो योगी तयार छ।' अनि उसले भनी—

हे प्यारे ! तिमी धैर्य धारण गरी सन्तोष मानी बस ;
गर्छन ईश्वरले भलो गर तिमी, उत्साहले साहस ।।
गनछु म उपाय झट्ट मनको पुग्नेछ इच्छा सब ।
जाँदैछु घरमा र गर्दछु छिटै, उद्योग भेट्ने अब ।।

यसरी आफ्नो प्रेमीलाई सम्झाई-बुझाई घर आई र त्रियाचरित्र झिकेर—'ऐय्या, मरें बाबा ! के गरौं ? भन्दै छट्पटिन थाली । उसको चर्को शब्द सुनेर लोग्ने आई सोध्यो—'प्यारी ! तिमीलाई के भयो ? किन कराएकी ?' अनि उसले बल्ल-बल्ल भनी—'मेरो मुटु दुखेर मन आँटे । अब एक छिनको पाहुना छु । कहीं उपाय गर्न सके गर्नुहवस् ।' त्यति सुन्नासाथ अनेक वैद्य हकीम डाकेर ल्यायो । त्यसमा विचरा वैद्यको के बल पुग्दथ्यो । एक छिन नाडी हेरर घरै गए । अनि उसले लोग्नेलाई भनी—'स्वामी ! मेरो थोटा चिन्ता गर्नुहवस् । ईश्वरले चाहे भने भलाई अवश्य निको हुनेछ । मैले सुनेकी छु—त्यो पोखरीको डिलमा बस्ने साधुले धेरैको रोग निको पारेका छन् रे ! अब तपाईं गएर तिनैलाई कुनै उपायले डाकेर ल्याउनुहवस् । तिनले मेरो रोग अवश्य निको पारिदिन्छन् ।

पत्नीको त्यस्ता कुरा सुनेर त्यो मूर्ख लोग्ने योगीकहाँ गयो र हात जोरेर भन्यो—'हे महाराज ! मेरी स्त्री बिमारी छ, मेरो घर गई उसलाई हेरिदिनुहवस् ।' योगीले भने—'बाबू ! म के जान्दछु र । म त केवल हरि-भजन जान्दछु ।'

त्यति सुनेपछि उसले भन्यो—‘एक पटक गएर हेरिदिनुहोस्, यो मेरो प्रार्थना हो, अहिले हुन्न भन्ने समय छैन महाराज !’ त्यति सुनेपछि लौ हड त हेरौं भनी योगी उसको साथै गए र अलिकति खरानी लिएर प्रियतमाको जिउ मुसारी दिनासाथ उसले पतिसित भनी—मलाई अहिले अलिकति आराम भए जस्तो छ। अनि उसले योगीको स्वागत-सत्कार र भोजन गरायो। अनि नकली योगीले भने—बाबू ! तिमी बजार गएर यौटा सुनको जन्तर तयार पार्न लगाई ल्याऊ, म त्यसमा यंत्र लेखेर हालिदिन्छु, त्यो जन्तर लगाएपछि यिनी कहिल्यै बिमारी पर्ने छैनन्। यति सुनेर त्यो लाटो बजारतिर गयो, यता दुवै पुराना प्रेमीले मौका पाए र मनको वेग शान्त पार्नतिर लागे। दुवैले दुई गिलास पानी पिइसकेपछि बल्ल त्यो लाटो आइपुग्यो र जन्तर दियो। योगीले अलिकति खरानी त्यसमा हालेर घाँटीमा झुण्डाई दियो, अनि म जान्छु भन्यो। अनि त्यो मूर्खले भन्यो—महात्मन् ! तपाईंले मेरो ठूलो उपकार गरिदिनु भयो। अब नित्य बिहान र बेलुकाको यहीं भोजन गर्न पाल्नुहोला।’ नकली योगी त यही खोजिरहेकै थिए, उनलाई ढुङ्गा खोज्दा देवता पाए झैं भयो, अनि नकली योगी बिदा भए र दिनहूँ भोजन गर्न आउन थाले। संयोगले एकपल्ट त्यो मूर्ख सेठले बाहिर जानु पर्ने भयो र ऊ परदेश गयो। यता दुवैले सल्लाह गरी जे भएको माल-समान बोकेर कुलेलम भए।

सुगाले भन्यो—हे मैना ! त्यस पुरुषको विश्वास हेर र त्यस कुलटा स्त्रीको विश्वास-घात हेर । अस्तु, ती दुवै जना यौटा अर्कै नगरमा पुगेर डेरा गरी बसेका थिए। एक दिन उसको छिमेकी निकै राम्रो यौटा उमेरदार ठिटो-लाई देखेर त्यो सेठकी छोरी मोहित भई र त्यसैतिर लहिँई । अब त्यो जौहरीको छोरालाई पनि नटेर्ने भई र नयाँ लोग्नेको घरमा गएर बसी । त्यसको चाल देखेर जौहरीको छोराले मेरी स्वास्नी फकाएर फलानाले लगिदियो भनी अड्डामा मुद्दा हाल्यो । अनि अड्डाले ती दुवैलाई डाकेर केर्दा त्यो सेठकी छोरीले भनी—हजुर ! म यसकी स्वास्नी होइन । यसले मलाई फकाएर लोग्नेको घरबाट उडाएर ल्याएको हो । यहाँ मलाई खान-लाउन समेत दिन नसकेको हुनाले म योसित बस्न राजी छैन । त्यस कुलटाको कुरा सुनेर हाकिमले जौहरीको छोरालाई भने—हे जौहरी ! यो आफ्नू पतिको भइन भने तिमीसित कसरी बस्तथी । अब तिमीले यसलाई त्यागिदिएमा नै हित हुनेछ । यति सुनेर लाचार भएको जौहरीको छोरो घर गयो । सुगाले भन्यो—स्त्री-जाति कस्ता बेइमान हुँदा रहेछन् सुन्यौ !

तोता मैनाको कथाको छैठौं भाग सकियो ॥ ६ ॥



# तोता मैनाको कथा

## सातौं भाग

### तेह्रौं कथा मैनाको—

मैनाले भनी—हे सुगा ! तिम्रो कथा सुनिसकें, अब मेरो कथा सुन । यौटा ज्योतिषपुर नामको शहर थियो । त्यहाँ भद्रसेन नामका एक प्रतापी राजा थिए । तिनको अत्यन्त राम्रो यौटा रणवीर नामको छोरो थियो । ती राजाकी रानी पनि साक्षात् रति जस्तै थिइन् । एक दिन रणवीर सिंह आफ्नो अभिन्न मित्र चन्द्रप्रसाद र केही सैनिक लिई शिकार खेल्न गए । जंगलमा यौटा मृग देखियो र दुवैले लखेटे । निकै पर पुगेपछि चन्द्रप्रसादको घोडा थाक्यो, उनी पछि परे । राजकुमार अगाडि बढ्दै गए । निकै पर पुगेपछि मृग बेपत्ता भयो र रणवीर पनि थाके ! पानीको प्यास लाग्यो र जलाशय खोज्न थाले ।

संयोगले यौटा सुनका खुड्किलामा स्फटिकको बुट्टा हालेको अत्यन्त रमणीय तलाउ देखे । त्यहाँ गएर पानी

पिई यता-उता हेर्दा त्यहाँको सौन्दर्य देखेर एक छिन छक्क परे र हेरे। त्यहीं यौटा अलि अग्लो स्फटिकको बुर्जा थियो, एक छिन त्यहीं थकाइ मारे। त्यसैको सामुन्ने यौटा उद्यान नन्दन वन जस्तै सबै फलफूलले शोभायमान यौटा उद्यान ( बगैचा ) देखेर त्यसलाई हेर्ने लोभ त्याग्न नसकी बिस्तारै उठेर बगैचामा गए। हेर्दै जांदा अलि पर यौटा उत्तम पलंगमा तीन जना सुन्दरीहरू बसेका देखे। तिनमा पनि माझमा बसेकी सुन्दरी त कामदेव स्त्री रति जस्तै थिइन्। यी सुन्दरीहरू को रहेछन् भन्ने विचार गर्दा गर्दै मूर्छा परे। एक छिनमा चेत आयो र—यस्ती रूपवती स्त्री त मैले आजसम्म देखेको पनि थिएन, यिनी को रहिछन् जान्नु पर्‍यो भन्ने विचार गर्दै अगाडि गए। तिनी आउन लागेको देखी चित्ररेखा नामकी सखी माझकी राजकुमारी सित भन्न लागी—हे मैयाँ! यी आउने कुनै राजकुमार जस्ता छन्। यिनीलाई डाकेर को रहेछन् सोधौं? राजकुमारी अनङ्ग लताले स्वीकृति दिएपछि आदरपूर्वक डाकेर सामुन्ने बसाली सोध्न लागी—'हे परदेशी! यहाँ कसरी र के कामले आउनु भयो? कुन देशका स्वामी हुनुहुन्छ? थकाई लागेको होला केही जलपान गरेर एक छिन विश्राम गर्नुहवस्।' चित्ररेखाको कुरा सुनी राजकुमार भन्दछन्—मेरो थकाइ र भोक त तपाईंको कुरा सुनेर नै हराइसक्यो तापनि भन्दछु,

मेरो देश ज्योतिषपुर हो । म भद्रसेन राजाको छोरो हुँ । आजै बिहान सेना र योद्धा मित्रका साथ शिकारमा आएको हुँ । साथी र सेना सबै कतातिर छुटे, थाहा छैन । म योद्धा मृगको पछि लाग्दा संयोगले यहां आइपुगें । मेरो परिचय यत्ति हो । अब यहांहरूको बिषयमा जान्ने इच्छा छ । यदि उचित ठान्नु हुन्छ भने आज्ञा हवस । त्यति सुनेपछि चित्र-रेखाले भनी—हे कुमार ! यी युवतीका पिता राजा खड्गसेन हुन । अझसम्म यिनी अविवाहित छन् । केवल यिनकै निम्ति यो महल र बगैचा बनाई, कड़ा पाले-पहरा राखिएको छ । तिनका कुरा सुनेर छक्क परेका राजपुत्रले सोधे—हे शुभे ! यिनको के अपराध वा दोषले विवाह नगरिदिएको होला ? अनि चित्र-रेखाले उत्तर दिई—महाशय ! यिनका पितासित योद्धा सुन्तला जस्तै मोति छ । त्यो मोतिको जोडा जसले ल्याइदिन सक्छ, उसैसित यिनको विवाह हुनेछ । यसको लागि अनेक राजपुत्र आए, गए तर कसैले पनि मोतिको जोडा लाउन सकेका छैनन् । त्यसै कारण यिनको पनि जोडा लाग्न सकेको छैन ।

यता राजकुमार र चित्ररेखाको वार्तालाप हुँदै थियो, उता राजकुमारी चम्पकलता राजपुत्रको सौन्दर्यमा मोहित भई आफ्नी संगिनीसित भन्न लागिन्—हे सखी हो ! यता हेर, सायंकाल भइसक्यो, हिंड महलमा जाऔं । पिताजीले थाहा पाउनुभयो भने रिसानी हुनेछ । यति भनेर ती जान तयार भएकी देखेर

राजपुत्रले मनमनै भने---हे ईश्वर ! तिमीले मेरो राज्य-सुख सबै खोसेर यो के आपत्तिमा पारिदियौ ! हे प्रिये, चम्पकलता ! दर्शन देऊ, नत्र म यही विरहमा प्राण त्याग्नेछु भनी अनेक अलाप-विलाप बनं लागेका देखी मोहिनीले भनी---हे राजकुमार ! किन यसरी अधीर हुनुभएको ! धैर्यपूर्वक प्रतीक्षा गरे ईश्वरले अवश्य मनोरथ पूर्ण गर्नेछन् । राजकुमारले उत्तर दिए---हे मोहिनी ! यस विषयमा कोही भोगिसकेको मानिसले मात्र जान्न सक्दछ, यो तिमीले बुझ्न समर्थ छैनौ । यति सुनेर मोहिनीले उत्तर दिईं---हे राजपुत्र ! चिन्ता गर्नु व्यर्थ छ । ईश्वरले सबै मङ्गल गर्नेछन् । बरु अब म गएर उनलाई सबै स्थिति बुझाइदिन्छु । मोहिनीका वचन सुनेर उनले फेरि भने--हे मोहिनी ! मेरो थोटा पत्र लगेर तिनलाई दियौ भने ठूलो गुन लाग्नेछ । यति भनी पत्र लेखेर दिए---

केही गरीन अवराध प्रिये ! कहीले ।  
त्याग्यौ मलाई किन हो यसरी अहीले ॥  
छु आशमा दुखित, दर्शन देऊ आई ।  
मर्नै भएँ नत यसै गरि हाइ-हाई ॥

त्यो पत्र लिएर मोहिनी गएपछि राजकुमार बौलाहा जस्तै भएर बगैंचामा घुम्नलागे । रात्रिको समयमा अपरिचित पुरुष त्यसरी जनाना बागमा एक्लैं घुमिरहेको देखेर मालीलाई निकै आश्चर्य लागेछ र नगीचै आएर भन्यो--महाशय ! तिमी को

हौ ? रात्तिको बखत जनाना बागमा के गर्न आएका ? जान्छौ कि गलहत्याइ दिऊँ ।" त्यसको कुरा सुनेर दिक्क मानी केही नबोलिकन त्यहाँबाट बाहिर निस्के । रातभरि प्रियतमाकै सम्झानमा बिताए । प्रातःकाल हुनासाथ उनका बिछुडिएका सेना र साथी पनि आइपुगे । अनि उनले सोधे— मित्र ! हजुरलाई किन चिन्तित देख्दछु । खोज्दा-खोज्दा बल्ल भेट भयो । अब आफ्नू हाल सुनाउनुहवस । राजकुमारले भने—हे मित्र ! म आफ्नू हाल के बताऊँ ? शिकारको पछि लाग्दा स्वयं शिकार बन्न पुगें । यौटी सुन्दरीका नयन-बाणले घायल भएर यहाँ असी उनैलाई सम्झिरहेको छु ।

राजकुमारको कुरा सुनी इनी कुनै रूपसीको जालमा परेछन् भन्ने जानेर सोधे—मित्र ! त्यो कुन स्त्री हो जसले तिमीलाई घायल गराई । फेरि तिमी अनिरुद्ध सुन्दरीका पति छौ । अनि यहाँ ती सन्दा रात्री कसलाई देख्यौ, सबै हाल भन । अनि राजकुमारले भने—हे मित्र ! त्यो सुन्दरी खड्गसेन राजाकी छोरी हो । तिनीसित यौटा ठूलो मोति छ, त्यसको जोड़ा लगाउनेसित विवाह गरिदिने प्रतिज्ञा रहेछ । अब म त्यो मोतिको जोड़ा खोज्न कहाँ जाऊँ ? त्यति कुरा सुनेपछि दोस्तले सेनालाई पठाइदिए र आफू दुवै जना त्यही बागकी मालिनी कहाँ पुगेर भने—हामी

लाई एक महीना यहीं बस्न देऊ। पछि तिमीलाई उचित इनाम दिनेछौं, अहिले यो लेऊ भनेर पाँच असर्फी हातमा राखिदिए पछि मालिनी पनि तयार भई र दुवै जना त्यहीं बसे।

उता चम्पकलताको स्थिति पनि अलग थिएन ऊ पनि विरह व्यथाले व्याकुल भई खान-पान, निद्रा त्यागी चिन्तित रहन लागिन्। तिनको विचित्र स्थिति देखेर चित्ररेखाले सोधी—हे मैयाँ! हजुरलाई के भयो? फेरि चिन्नु न जान्नू-को कुनै एक बाटो हिड्नेलाई देखेर मोहित हुनु र त्यसैको वियोगमा आफूलाई व्यथित तुल्याउनु, यौटी बुद्धिमती राज-पुत्रीको निम्ति के उचित काम हो? बरू अब मैले भनेको मानेर तिनको ध्यान मनबाट फाली सुखसित बस्नुहोस्। सखी चित्ररेखाको कुरा सुनेर उनले भनिन्—'हे सखी! तिमीले भनेको कुरा उचित हो, तर यो चित्त कसैको अधी-नमा रहन्न। बरू जसरी हुन्छ मेरो तिनैसित भेट हुने उपाय गर। नत्र अब मेरो जीवन रहन्न।' यता दुवैको कुरा चल्दै थियो, त्यत्तिकैमा मोहिनी आइपुगी र चम्पकलताले सोधिन्—'मोहिनी! मेरा प्रीतमको के स्थिति छ? बगैचामै छन् कि कतै गए?' मोहिनीले उत्तर दिई—हे मैयाँ! हजुर यहाँ उनको विरहमा जति व्याकुल हुनुभएको छ, उता उनी पनि यो भन्दा कम व्यथित भएका छैनन्। मैले सकेसम्म

सम्झाउँदा पनि तिनमा धैर्य आएन र म आउन लाग्दा एक चिट्ठी दिएका छन्—यति भनी चिठी हातमा राखिदिई। त्यो पत्र पढेर निकै बेर विचार गरी उनले पनि मोहिनीलाई भनिन्—मोहिनी ! यो पत्र भोलि सबेरै लगेर उनकै हातमा दिनू र बगैंचाकी मालिनीलाई मेरो प्रियतमको उचित सेवा गरेर बस्न दिनु भन्ने समचार सुनाउनू। यो कुरा कतै सुइको नपाओस् पनि भनिदिनु। भोलिपल्ट बिहानै मोहिनी पत्र लिएर पुगी र राजकुमारलाई दिई राजपुत्रीको सारा विरह वेदना सुनाई। अनि उनले पत्र लिएर त्यको विषय सबै आफ्ना मित्रलाई पनि सुनाए। पत्रको विषय बुझेर साथीले भने—'राजकुमार ! अब हजुरको इच्छा पूर्ण हुनमा शंका रहेन, केवल धैर्य धारण गरी समयको प्रतीक्षा गर्नु-हवस् ।'

यता राजकुमारीकी आमाले आफ्नी छोरीको विषयमा थाहा पाएर उनीकहाँ गई सोधिन्—'मैयाँ ! तिमीलाई के भयो ? किन मुख पनि निन्याउरो छ, बिरामी जस्ती देख्दछु सबै कुरा मलाई भन ।' आमाको प्रश्न सुनेर लाजले केही उत्तर दिन सकिनन्। केवल टाउको झुकाएर रोइमात्र रहिन्। अनि तिनकी आमाले चित्ररेखालाई एकान्तमा डाकेर सोधिन्। अनि चित्ररेखाले जाने - सुने जति सबै कुरा बिन्ती चढाई—अर्थात् परदेशी राजकुमार प्रति मोहित

भएकी र उपनि मैयाँ प्रति मरिमेट्न खोजेको कुरा सबै सुनाएपछि बिन्ती गरी––'महारानी ! मेरो विचारमा त महाराजलाई बिन्ती चढाई यी दुवैको विहे गरिदिनु उचित छ। होइन भने यी दुवै आफाफ्ना विरहमा डढेर खरानी भइसकेपछि पछुताएर पनि केही हात लाग्ने छैन।' चित्र-रेखाको कुरा सुनेर रानी महलमा गइन् र विश्रामको समय-मा राजासित बिन्ती गरिन्––'महाराज ! उमेर पुगिसकेकी छोरी कति दिनसम्म अविवाहित राख्ने ! अहिले संयोगले असल राजकुमार स्वतः आएका छन्। दुवैमा माया-प्रीति पनि बसिसकेको छ। अतः विवाह गरिदिनु बुद्धिमानी हुनेछ। मेरो सल्लाह यति हो, अब हजुरको जो विचार।' रानीको कुरा सुनेर राजाले पनि स्वीकार गरे। अनि प्रातः काल भएपछि सिपाही डाकेर––हाम्रो बगैंचामा दुई जना पाहुना बसेका छन्, तिनलाई डाकेर ल्याउनु भन्ने हुकुम दिए। सिपाही गएर राजाज्ञा सुनायो, अनि राजकुमार अब के विपत्ति आइलाग्ने हो भनी चिन्तित भए। त्यो देखेर तिनका मित्रले भने––हे साथी ! पुरुष भएर पनि किन विपत्ति देखि डराएका ? अब जे जस्तो परे पनि त्यसलाई न भोगी सुख छैन। मेरो विचारमा त यो शुभ लक्षण हो।

यस्तै कुरा गर्दैर दुवै मित्र राजाकहाँ पुगेर नम्रता साथ राजालाई सलाम गरे। राजाले दुवैलाई आदरपूर्वक मेचमा

बसाली सबै कुरा सोध-पूछ गरी यौटा भिन्नै महलमा खान-पान, दास-दासी आदि सारा व्यवस्था मिलाएर बस्न दिए। त्यसैपछि ज्योतिषी द्वारा उत्तम लग्न र शुभ दिन निश्चय गरी निकै धूम-धामसित गन्धर्वको रीतिले दुवैको विवाह गरिदिए। त्यस मौकामा दीन-दुखी एवं ब्राह्मणहरूलाई प्रसस्त धन बाँडियो। राजाले छोरी ज्वाईलाई भिन्न महल तयार गराई त्यसैमा बस्ने व्यवस्था मिलाइदिए। अब बल्ल दुवै प्रेमीको इच्छा पूर्ण भयो र त्यही महलमा सुख-पूर्वक दिन बिताउन लागे। सुखका दिन बितेर गएको थाहै भएन। एक दिन राजकुमारले आफ्ना सासु-ससुरासित भने—महाराज ! घर छाडेको धेरै दिन भयो, अब आज्ञा पाए आफ्नू देशतर्फ जाने थियौं। ज्वाइँको इच्छा बुझी राजाले उचित दाइजो दिई खुशीसाथ छोरी बिदा गरिदिए। तिनीहरूले तीन दिनको बाटो हिंडिसकेपछि एक दिन बास बसेको स्थानमा मित्र र रानीलाई बासमै छाडी राजकुमार एक्लै डुल्न निस्किए। 'परदेश हो, सतर्क रहनू' भनेर मित्र-लाई सावधान पनि गरेका थिए। रानी चम्पकलता त्यहीं एक कोठामा पर्दाभित्र बसेकी थिइन्। दैवसंयोग मन्त्री-पुत्र-को औंठी त्यहीं खसेछ। उनले थाहा पाएनन्। पछि रानीले पाएर—'यो औंठी मेरा स्वामीकै होला, यहाँ बिर्सेर गएछन्।' यति विचार गरेर औंलामा लगाइन्। राज-

कुमार डुलेर आए। खान-पिन गरेर राजकुमार र चम्पक-लता पनि पलंगमा पल्टिए। दैवसंयोगले राजकुमारको नजर औंठीमाथि पर्‍यो। अनि मेरो साथीको औंठी इनको औंलामा कसरी आयो। अवश्य यो रानी दुराचारिणी रहिछ भन्ने शंका पर्‍यो। शंकाले तर्कको रूप लियो—यस्तो स्त्रीको विश्वास गर्नु मूर्खता हो। कुनै बखत यसले मेरो प्राण लिन पनि बेर लाउन्न। यसलाई यो दुष्कर्मको फल अवश्य दिनु पर्दछ भन्ने निश्चय गरेर तरवार झिकी रानी चम्पकलतालाई दुइ टुक्रा पारिदिए। रानीको मृत्यु भएर पनि रिस शान्त भएन र आफ्नू साथीकहाँ पुगी उसलाई पनि सुतेकै मौकामा दुई टुक्रा पारिदिए। त्यसपछि अफसोच गर्दै आफ्नो देशको बाटो लागे।

यति कथा सुनाई मैनाले भनी—हे सुगा! राजकुमार र चम्पकलतामा कस्तो गाढा प्रेम थियो। दुवै एक छिन पनि छुट्टिएर बस्न सक्तैनथे तर त्यही राजकुमारले ती दुवै निर्दोषलाई केही विचारै नगरी मारिदिए। पुरुष कस्ता निर्दयी हुँदा रहेछन्। स्त्री र साथीको के अपराध थियो र दुवैले ज्यान दिनुपर्‍यो। यति सुनेपछि सुगाले भन्यो—

यसमा रानीको मूर्खता हो। तिनले औंठीको विषयमा सबै कुरा राजकुमारलाई भनिदिएकी भए त्यस्तो परिस्थिति

आउने नै थिएन । कुरा बुझ, अन्य व्यक्तिको चीज आफ्नी पत्नीको पासमा देखेपछि जसले पनि त्यही गर्दछ, जो राज-कुमारले गरे । यसमा तिनलाई दोष दिनु व्यर्थ छ । अब म तिमीलाई एक कथा सुनाउछु, ध्यान दिए र सुन, भनी सुगाले आफ्नू कथा सुनाउन थाल्यो–पाठक, त्यो कथा आठौं भागमा-पढ्नुहवस् ।

तोता-मैनाको कथा सातौं भाग सकियो ॥ ४ ॥

# आठौं भाग

## चोथौं कथा सुगाको-

सुगाले भन्यो—हेर मैना ! अब म तिमीलाई पुरुषको वीरता, शूरता र धैर्यको कथा, त्यसैमा स्त्रीको धूर्तता, निर्दयता र कालिनाको विषयमा यौटा उत्तम र शिक्षाप्रद कथा भन्दछू, ध्यानपूर्वक सुन। बंगालमा मेदिनीपुरी नामको यौटा अत्यन्त रमणीय शहर थियो। त्यहाँका राजा वज्र-सेन नामका पूर्ण राजनितिज्ञ थिए। तिनकी छोरी रूपमा चन्द्रमा जस्ती मृगका जस्ता नयन भएकी, कोकिलको जस्तै मीठो र मधुर बोली भएकी परम सुन्दरी छन् भन्ने कुरा वर-परका साना र ठूला-ठालू, राजकुमारहरूलाई पनि पूरा ज्ञान थियो। ती पद्मावती नामकी मैयाँले आफ्नू विवाहको विषयमा प्रतिज्ञा गरेकी थिइन्। जसले मेरा प्रश्नहरूको ठीक-ठीक उत्तर दिनेछ, म उसैसित विवाह गर्नेछु। यदि उत्तर दिन सकेन भने झ्यालखानमा सारा जीवन बिताउन बाध्य पार्नेछु। त्यस्तो कड़ा प्रतिज्ञा भए

पनि अनेक राजकुमारहरू दुःसाहस गरेर आई तिनका प्रश्नाहरूको उत्तर दिन नसक्दा झ्यालखानमा कोठो पिंधीरहेका थिए अनेक राजकुमार त निष्ठुर राजपुत्रीका कैदमा परेर जीवनको अन्तिम दिन काटिरहेका थिए ।

एक दिन चौठा राजकुमार मौका पाएर त्यसको कैदखानाबाट उम्केर भागेछ । त्यसरी भागे पनि राजकुमारीको रूपमा मोहित भएका ती राजपुत्र कसरी ती राजकुमारीलाई प्राप्त गरौं कहाँ जाऊँ, कोसंग भनौं, कसले मेरो सहायता गर्ला भन्ने चिन्तन गर्दै पागल जस्ता भएर जंगल, पहाड, ग्राम, नगर सबैतिर भ्रमण गर्दै हिंड्न थाले । राजकुमारीको विरहमा डुबेका राजकुमार यस्तै चालले व्याकुल भएर घुम्दा-घुम्दा एक दिन नन्दन नामको नगरमा पुगी चौटा वृक्षको छायामा बसेर आफ्नू मनमनै अब के गरौं, के गरे सफल होला र कसरी ती सुन्दरीसित विवाह गर्न पाइएला भन्ने विचार गर्दै थिए ।

दैव संयोगले त्यसै शहरका राजा विजयसेन आफ्ना सरदारहरू साथमा लिएर शिकार खेल्दै त्यहीं आइपुगे । ती राजकुमारलाई रुखमनि झोक्रिएर बसेका देख्दा तिनको मनमा दया लागेर नजीक आई सोधे——राजा विजयसेन भन्दछन्——हे परदेशी ! तिमी को हौ ? कहाँबाट आयौ ? कहाँ जाने विचार छ ? आफ्नू हाल मलाई भन । म सकेको

अनि तिम्रो सहायता [illegible] गर्नेछु । तिनको त्यस्ता सहानुभूतिका कुरा [illegible] [illegible]कुमारले लामो सास फेरि आफ्नू हाल [illegible]

[illegible] समाधि बक्सनु भए, सन्तोष मान्थें अति ।
[illegible] ननलाइ उत्तम थियो के भोग्नु यो दुर्गति ॥
[illegible] मनमोहिनी कन उहाँ, मैले स्वयं जुन् दिन ।
[illegible] पागल झैं भएर यसरी, दुःखी छ मेरो मन ॥

तिनको त्यस्ता दुःखपूर्ण उद्गार सुनेर राजाले थाहा पाए––यी कुनै राजकुमार रहेछन् र कुनै सुन्दरीको प्रेममा साडिएछन् तर उनले इनको प्रस्ताव नमानेकी हुनाले यिनी पागल झैं भएर ग्राम, नगर जंगल-पहाड चारैतिर हिंडेका रहेछन् । यसपछि राजाको मनमा दया लाग्यो र तिन्लाई सान्त्वना दिएर स्नेहसाथ भने––हे परदेशी साथी ! तिमी मनमा धैर्य धारण गर । अधैर्य भएपछि त बनिसकेको काम पनि बिग्रन्छ । अतः शान्त चित्तले आफ्नू सबै परिस्थिति यथार्थ रूपमा मलाई सुनाऊ । अनि मलाट हुने र मैले गर्न सक्ने सहायता अवश्य गर्नेछु । सुन, संसारमा परोपकार जस्तो ठूलो धर्म अरू कुनै छैन––यो कुरा मलाई थाहा छ, त्यसो हुनाले तिम्रो उपकार वा आशा पूर्ण गर्ने उपाय अवश्य गर्नेछु । अबदेखि तिमी आफ्नू मनको चिन्ता फिक्री झिकेर फालिदेऊ ।

राजाले त्यस्तो सहानुभूतिले भरिएको सान्त्वना दिएको सुनी राजकुमारले आफ्नू सारा हाल वर्णन गरेर सुनाइदिए। तिनको हाल सुनेर राजाले अंकमाल गरेर ठूलो प्रेम देखाई ती विरहले पीड़ित राजकुमारलाई साथमा लिई आफ्नू महलतिर प्रस्तान गरे। ती विजयसेन राजा चन्दन नगरका राजा हुन् भन्ने अघिनै वर्णन गरिएको छ। तर वास्तवमा तिनी गुरु गोरखनाथका शिष्य थिए। एक दिन भूत, भविष्य र वर्तमान तीनै कालको सारा स्थिति स्पष्ट जान्ने गुरु गोरखनाथले यौटा विचित्र सुगा आफ्ना शिष्य विजयसेन राजालाई दिएका थिए। त्यो सुगा बुद्धिमान र पण्डित पनि थियो। तीनै कालको सारा हाल जान्न सक्थ्यो। फेरि त्योसँग जे सोधे पनि त्यसको ठीक-ठीक उत्तर दिन्थ्यो। राजा पनि जुनसुकै कार्य आइपरे पनि त्यही सुगाको सल्लाह अनुसार त्यस कार्यलाई पूरा गर्दथे।

आफ्ना विरही मित्रलाई महलमा ल्याएर खाने बस्ने राम्रो व्यवस्था मिलाइदिए र स्नेहसाथ राख्दा भए। ती राजकुमार पनि राजाको आफू प्रति प्रेम र उदारता देखेर परम हितैषी ठानी कुनै वस्तुको संकोच नमानी त्यही महलमा आनन्दले बस्न लागे। एक दिन विजयसेन आफ्नू बुद्धिमान सुगाको नगीच गए विरही राजपुत्रको विषयमा सोधे--'हे शुक ! मेरा अतिथिको इच्छा पूर्ण पूने कुनै उपाय

छ कि छैन । यदि छ भने मलाई बताऊ ।' आफ्ना अतिथि मित्रलाई यहीं ल्याउनु होस्, अनि म उनको विषयमा जे जानेको भन्नेछु र उनोसित पनि केही वार्तालाप गर्ने मेरो विचार छ । सकेसम्म तिनको भलो हुने उपाय भन्न गाह्रो मान्ने छैन । सुगाको विचार जानेर पाहुनालाई डाकेर ल्याए-पछि सुगाले ती विरही राजपुत्रलाई स्नेहपूर्वक भन्यो––हे मित्र ! तिमी यी स्त्री जातिको जालमा आफूलाई न अल्झाऊ, किनकि आइमाईको जाल अत्यन्त डरलाग्दो हुन्छ । तिनको जालमा अल्झेको मानिस त्यसबाट सहजै फुत्कन सक्तैन । उसका दिन विरहमा ठक्कर खाँदै, कल्पन्दै र अनेक कष्ट सहँदै बित्दछन् । कहिले त तिनको जालमा परेर प्राण गुमाउने स्थिति पनि आइपुग्दछ । हे मित्र ! स्त्री-जातिको नक्कल-अक्कल, रूप, यौवन, स्नेह आदि सबै बाहिरका देखाउने मात्र हुन् । पेटमा त कालकूट विष भरिएको हुन्छ । त्यसै कारण मैले भनेको मानेर त्यतातिरबाट आफ्नू मन फर्काऊ र आफ्नू देशमा गएर कुनै राम्री कन्यासित विवाह गरेर राज्य संचालन गरी सुखी जीवन बिताऊ र आफ्ना माता-पितालाई आनन्द प्रदान गर । फेरि तिमीलाई स्त्रीहरू कस्ता-कस्ता हुन्छन् र के-के गर्न सक्तछन् भन्ने पनि ज्ञान छैन । यी नारी मात्र असाध्य बाठा हुन्छन् । यिनको चाला बुझ्न ठूला पण्डितलाई पनि कठिन छ । म तिमीलाई

यौटी स्त्रीको कथा सुनाउँछु, ध्यान दिएर सुन--यसले तिमीलाई शान्ति मिल्नेछ र चित्त बुझ्नेछ ।

## यौटी स्त्रीको कथा–

बर्दमान नामको नगरमा यौटा मुसलमान ( पठान ) बस्तथ्यो । त्यसकी पत्नी अत्यन्त रूपवती थिई तर त्यसकी कुनै यौटा जाटसित मित्रता थियो । त्यसको यौटा नौ-दस वर्षको छोरो पनि थियो । त्यो पठान सधैं आफ्नू काम ( नौकरी ) मा जान्थ्यो । ऊ गएपछि त्यो जाट आइपुग्थ्यो । र दुवै खूब हाँसी - ठट्टा गरी आनन्द भोग्दथे । अनि पठान कामबाट आउने बेला भएपछि जाट आफ्नू घर जान्थ्यो । यो सबै कुरा छोरोले पितालाई सुनाइदिन्थ्यो । छोरोको कुरा सुनेर पठान दिनहुँ स्वास्नीलाई कुट्दथ्यो । एक दिन पठान काममा गयो, अनि जाट आइपुग्यो । अनि त्यस स्त्रीलाई सोध्यो---आज किन झोक्काएर बसिरहेकी ? के भयो ? उसले भनी---मेरो झोक्किने कारण अरु केही होइन, हामी दुवै जनाले मोज र ठट्टा गरेको सबै बाबुलाई सुनाईदिएर मलाई दिनहुँ कुटिरहन्छन् । यसैले म दुःखी छु । यति सुनेर जाटले भन्यो—'यो मेरो छोरोलाई घाँटी थिचेर मारिदिए हुन्छ ।' सदाको कष्ट जान्छ ।' यस्तो सुनेर कामको वश परेकी स्त्रीले आफ्नू छोरोलाई घाँटी थिचेर मारी । अनि दुवै आनन्द गरे र पति आउने बेलामा जाट गयो । उसको पति आउना साथ—गुहार, गुहार ! मेरो पतिले छोरोको प्राण

लिन लागे भनेर कराई । अनि वर-परका छिमेकी आएपछि स्त्रीले भनी—'यो छोरोले थौटा पैसा माग्दा नदिएर आज यसको हत्या गरिदिए।' यस्तो कुरा सुनी सारा छिमेकी मिलेर पठानलाइ पक्री पुलिसको जिम्मा लगाइदिए। पुलिसले राज-दरबार लगी पठानलाई राजाको सामु उभ्याएर सारा स्थिति बताएपछि राजाले सोधे—यस पठानले आफ्नू छोरो-लाई मार्नलागेको देख्ने कोहि साक्षी छ ? तब उही स्त्रीले भनी—महाराज ! मेरो पतिले छोरोलाई मार्दा देख्ने फलानो जाट छ। संयोगले उसलेला जाट त्यहीं आएको थियो। तुरुन्त सिपाही गएर जाटलाई समातेर हाजिर गराए। राजाले सोधे—'तैंले के देखिस, के कसो भयो, सबै सत्य-सत्य बयान गर।' राजाको हुकुमसुनी जाटले त्यस वेश्याले भने अनुसार सारा बयान गरिदियो। अपराधीले हत्या गर्दा प्रत्यक्ष देख्ने साक्षी समेत भएको हुनाले कानून अनुसार राजाले पठानलाई फाँसीको हुकुम दिए र पठान मारियो। बुद्धिमान सुगाले भन्यो—हेर स्त्रीले कामदेवको वेग सहन नसकी पति र छोरो दुवैलाई मारी। अतः मेरो अर्ति मानी तिमी पनि नारीका जालमा नपर ! यस्ता कुरा सुनी राजपुत्रले भने—'हे शुकराज ! एक पल्ट जसरी भए पनी ती सुन्दरीलाई अँगाल्न पाए, मेरो मनोरथ पूर्ण हुन्छ। त्यसपछि प्राण नै दिनुपर्छ भने पनि म तयार छु।'

विजयसेन राजाले आफ्ना अतिथि राजपुत्रको इच्छा सुनी केही बेर मनमा विचार गरी बुद्धिमान सुगालाई भने—हे शुकराज ! मेरा मित्र ती राजकुमारीलाई नपाइ सन्तुष्ट हुने भएनन् । वरू यिनको इच्छा पूर्ण हुने कुनै सजिलो उपाय भए शिक्षा दिनुहोस् । मेरो बानी छ अर्काको कष्ट हेर्न नसक्ने । अतः जबसम्म मेरा अतिथि प्रसन्न हुन्नन्, तबसम्म मेरो मन प्रसन्न हुँदैन । बुद्धिमान् सुगाले उत्तर दियो—राजन् ! हजुर पनि आग्रह गर्नु हुन्छ र हजुरको पनि सम्मति छ भने ती मैयाँको नाम ग्राम सोधेर मलाई भन्नुहोस् अनि म उपाय विचार गर्नेछु । अनि विजयसेनले पाहुनासित सोधे—हे मित्र ! ती सुन्दरीको नाम के हो र कुन नगरमा बस्तछिन् सबै मलाई सुनाऊ । तब राजकुमारले भने—

बंगालाको राज्यमा नगर मोदिनी नाम ।
वज्रसेन भूपाल छन् साच्है नै सरनाम ।।
कीर्ति ख्याति ठूला छ न्याय-पथमा चल्ने, गरी शासन ।
तिन्कै राजकुमारी चन्द्र सरिकी छन् रूपमा यौवन ।।
उन्को वर्णन गर्न सक्तिन सबै, पद्मावती नाम हो ।
सेवा गर्न तयार छू अनि मिले, पुग्नेछ इच्छा छ जो ।।

यति सुनेर राजाले सुगालाई भने—हे बुद्धिमान शुक ! बंगाल राज्य यहाँबाट झण्डै एक महीनामा पुगिन्छ । उहाँका राजा वज्रसेन हुन् । तिनकी सुकुमारी सुन्दरी कन्याको नाम पद्मिनी हो । तिनैमाथि यी अतिथि मोहित भएर आफ्नो

होश गुमाइसकेका छन् । अब तिमी मेदिनीपुर गएर ती राजकुमारीलाई प्राप्त गर्ने उपायको पत्ता लगाई मेरा अतिथिको इच्छा पूर्ण गरायौ भने म असाध्य खुसी हुनेछु । फेरि यस्तै परोपकारमा मेरो मन लागिरहेछ ।

राजाको इच्छा बुझी बुद्धिमान सुगाले भन्यो—हे राजन् ! बंगाला देशलाई जादूको नगरी भन्दछन् । अर्थात् त्यहाँ जादू टुना जान्ने पुरुष भन्दा पनि बर्ता स्त्रीहरू हुन्छन् ! म उहाँ गएँ भने उहाँका कसैले मन्त्र द्वारा मलाई नपक्री छाड्ने छैनन्, तापनि हजुरको आज्ञा र कामको निम्ति म अवश्य जान्छु ! अब मेरा दुवैतिरका पङ्खमा हीरा मोति टाँकन लगाउनु सक्स् अनि म उहाँ गएर सारा स्थिति बुझी तुरुन्त आउने छु ! सुगाले भने अनुसार राजाले दुवै पखेटामा हीरा-मोति, पन्ना, मानिक आदि टाँकन लगाए । अनि सुगा उहाँबाट उडेर दस दिनमा मेदिनीपुर दाखिल भई पद्मावतीको कोठाकै झ्यालमा गएर बस्यो । मैयां पद्मावतीले यस्तै अनौठो सुगा देखेर भनिन्—

आएका किन हे शुक ! कुन हो तिम्रो देश ।
जाँदैछौ अहिले कहाँ, के हो कार्य विशेष ॥

सुगाले उत्तर दियो—हे मैयां ! म राजा विजयसेनको मित्र हूँ तिनले मलाई पुत्रझैं स्नेह गरेर राखेका छन् । ती राजा जस्ता दयालु र गुणवान, नीतिज्ञ प्रजापालक भूपाल

बत्ती लिएर खोजे पनि पाउन कठिन छ। तर हे मैयाँ—

गर्छन् आफ्नु विवाह स्त्री-पुरुषले आएपछि यौवन।
देख्दैछु अविवाहिता हजुरको, यो रूप रित्तो किन ?
गर्नैपर्छ विवाह हो प्रकृतिको, मान्छन् ठुलो बन्धन।
बाधा पार्नु हुँदैन यो नियममा, भन्छन् सबै सज्जन॥

सुगाले भनेको सुन्दा छक्क परेकी मैयाँ मनमनै विचार गर्न थालिन्—यो पक्का पनि पक्षी होइन, अवश्य कुनै युवराज हो। मन्त्र-तन्त्रले यसलाई कसैले सुगा बनाएको छ, नत्र यसरी मानिस झैं कुरा गर्ने सुगा कहिले पनि देखे सुनेको थिइनँ। यसलाई कसै गरी पक्रन पाए हुने थियो, इत्यादि तर्क गर्दै भनिन्—हे शुक! पूर्व जन्मको पाप अवश्य भोग्नु पर्छ भन्ने शास्त्रको वचन तिमीले पनि सुनेकै होला। म यस्ती अभागिनी छु कि मेरा पिताले मेरो विवाह गर्न अनेक देश-देशान्तरमा मानिस पठाई कोशिश गर्नुभयो, तर मलाई सुहाउँदो र मिल्दो वर ( राजकुमार ) पाइएनन्, यही कारण म अविवाहित छु।

मैयाँको यति कुरा सुनी शुकले फेरि भन्यो—हे मैयाँ! यस संसारमा जस्ती अनिन्द्य रूपवती सुन्दरी तिमी छौ; उस्तै जगत्‌मा एकमात्र उत्तम- रूप, शील, गुणवान् मेरा युवराज छन्। उनको कीर्तिको वर्णन गरेर साध्य छैन। मैयाँ! मैले झुठो भनेको होइन। हजुरको जोडा मिल्ने वर

हुन लायक मेरा मित्र युवराज छन् ।

मैयाँले भनिन्—हे शुक ! तिमीले भनेका छन्दा मेरो चित्त-बुझ्यो अब तिमी भनेर आऊ । म यौटा औंठी दिन्छु, तिमी लैजाऊ र आफ्ना युवराजलाई मेरो चिनो भनेर देऊ, अनि मेरा दुःख पनि वर्णन गरेर छनाऊ । यति गरिदियौ भने म तिम्रो गुन कहिल्यै विर्सने छैन ।

आऊ, आऊ हे शुक । आऊ मेरो पास ।
औंठी दिन्छु जाउ लिई, गर्छु बिहेको आस ॥

सुगाले उत्तर दियो–

मैले आउनु के गरी स्त्रीको हुन्न पत्यार ।
भोग्दैछन् दुख बेसरी, घेरै राजकुमार ॥

मैयाँले भनिन्—

मिथ्या बोल्दिन हे सुक ! जान्नू सत्य बयान ।
हामी दुइको माझका साक्षी छन् भगवान् ।

बुद्धिमान सुगाले मैयाँको कुरामा पत्यार गरी त्यहां-बाट उडेर मैयांको कुममा बस्यो । अनि पद्मावतीले हातले समाती सखी मोहिनीसित भन्दछिन्—हे सखी ! यो सुगा होइन । कुनै जादू टुना जान्ने पुरुष हो । यो कपटी मेरो सौन्दर्य हेर्न आएको हो । अब यसलाई नमारी छाड्दीन । झट्ट गएर यौटा लाग्ने कर्द ल्याऊ, त्यसैले यसको घाँटी काटिदिन्छु । यसका पखेटामा लागेका हीरा-मोती, रत्न

झिकेर आफ्नू जुत्तामा टाँक्न लगाउँछु । यो मलाई छलन आए-पछि मैले पनि छलले समाती मार्दा कुनै पाप लाग्दैन ।

मैयाँको त्यसतो क्रूर विचार जानेर बुद्धिमान शुकलाई निकै रिस उठ्यो तर रीस रोकेर अत्यन्त मीठो स्वरमा भन्यो—हे मैयाँ ! मेरो हत्या गरेर यिमीलाई के लाभ होला ! हुन त मैले बाँच्नुभन्दा मर्नु नै उत्तम छ, तर हेर म तिमी-लाई काया प्रवेश गर्ने विद्या सिकाइदिन्छु । म मरें भने त्यो विद्या मेरो साथै जानेछ । संसारमा कायाप्रवेश विद्या रहिरह्यो भने कति जनाको भलो हुनेछ । मैले सिकाएको मन्त्र पढी मेरो शरीरमा प्रवेश गरी स्वयं कायाप्रवेशको प्रभाव वा रमिता हेर्न सक्नेछौ । फेरि त्यो मन्त्र द्वारा जुन रूपको इच्छा गरे पनि धारण गर्न सकिन्छ । पहिले मसित काया प्रवेश सिक अनि मलाई मारिदिए हानि छैन । मैयाँ ! यस संसारमा मेरो स्त्री छैन । विना स्त्री बाच्नु पनि व्यर्थ छ । अतः तिम्रो हातबाट मर्न पाए मेरो पनि गति हुनेछ । अब मलाई आफ्नू काननेर लैजाऊ र यी सबै केटी सुसारे-हरूलाई यहाँबाट हटाऊ, किनकि मैले मन्त्र सुनाउँदा तिमी बाहेक अरुले सुन्न हुँदैन ।

सुगाको कुरामा मैयाँलाई विश्वास लाग्यो र काया प्रवेश सिक्न पनि प्रबल इच्छा भएको हुनाले अरु सबैलाई कोठाबाट बाहिर पठाइन् अनि सुगालाई लौ मन्त्र सुनाऊ

भनी आफ्नू काननेर लगिन् । सुगाले पनि आफू उम्कने मौका जानी मन्त्र सुनाउने निहुँले घांटी लमक्क पारी मैयां-को पुक्क उठेको बाटुलो गालामा बलपूर्वक चुच्चो गडाई टोकिदियो र रगतको धारा बग्यो । ठीक उसैबेला मैयांको हात हलुको भयो र सुगा उडेर फेरि उनकै झ्यालमा बस्यो । यता मैयां 'मरें बाबा' भन्दै भूमिमा ढलेर मूर्छा परिन् । मैयां कराएको सुनी केटी-सुसारे दगुर्दै आइपुगे ।—मैयांको अवस्था देखेर अनेक उपचार गरी होशमा ल्याउने उद्योग गर्न लागे । सुगा चाहिं झ्यालमा बसेर रमिता हेर्दै थियो । निकै बेरमा जब मैयांलाई चेत आयो तब विस्तारै उठेर गालाबाट बगेको रगत देख्नासाथ रिसले चूर भई सुगालाई भनिन्—हे पापी शुक ! मेरो गालामा चुच्चो गाडेर मीठो रस चाखिस् तर तेरो बुद्धि पुगेन र टोकिदिइस् । यसको साटो म अवश्य लिन्छु । तँलाई यमराजको नगरमा नपुऱ्याई मलाई सन्तोष हुँदैन । यति भनी सखीलाई डाकेर—मेरो शिकारी बाजको पिंजरा झट्ट ल्याओ अधमको बाज द्वारा घाँटी काट्न लगाउँछु ।

उता बाजको पिंजरा ल्याउन सुसारेहरू दगुरे, यता सुगाले ज्यान बचाउन मौका पायो र उड्यो । केही दिनमा सुगा आफ्ना राजा विजयसेनको हजुरमा आइपुग्यो । त्यस-लाई देख्नासाथ राजाले प्यारो गरेर पद्मावतीको विषयमा

सोधे । अन उसले सारा वृत्तान्त वर्णन गर्न लाग्यो—हे राजन् ! ती मैयां सौन्दर्यमा र यौवनमा दर्शनीय रहिछन् तर तिनको बानी बहुतै घटिया रहेछ । तिनले मलाई समातेर उन भगवानको साक्षी गरी किरिया खाएर समातिन् । अनि तत्काल मार्न तयार परिन् । अनि लाचार भइ गुरु गोरखनाथको कृपाले प्राण बचाइ आइपुगें । राजकुमारी पद्मावती जती रूपवति छन्, उतिनै घटिया बानी भएकी रहिछन् । सुन्नुहवस् —

राम्री छन अति दिव्य यौवनवती, मैयाँ ति पद्मावती ।
हाँस्ता खस्तछ पुष्प रूप छ सुधा, जस्तै मिठो झन् कती ॥
त्यस्ती रूपवती भएर निठुरी, सान्है रहीछन् तिनी ।
त्यस्ता, भित्र दया कदापि नहुने, हुन्छन् सदा पापिनी ॥
यस्ती छन् सुमुखी भनेर कसरी, मैले गरुँ वर्णन ।
देख्ने छन् दुई नेत्र मौन, मुखले, गर्दैन त्यो दर्शन ॥
डाकिन् प्रेम गरी गएँ म नगिचै, पक्री लिइन् बेसरी ।
आँटिन् मार्न र युक्तिले छल गरी, भागें असाध्यै डरी ॥

बुद्धिमान् सुगाका कुरा सुनी राजा विचार गर्न लागे—मैले जसरी भए पनि पद्मावतीको अभिमान एकपल्ट तोड्नै परेको छ । त्यो सुन्दरीले सान्है अन्याय गरी, यस्तो त आजसम्म कसैले पनि गरेको थिएन । यति विचार गरी राम्रा माइत हेराई प्रस्थानको तयारी गरी पंच हतियारले सजित भई घोडा चढी, सुगालाई साथमा लिई पद्मावतीको

दर्प भूलों पार्न हिंडे। ठीक समयमा उहां पुगेर पद्मावतीके बगैचामा बस्न पुगे। त्यहाँ रक्षकले रोक्ने निकै प्रयत्न गरे तर चांदीका र सुनका जुत्ता पाउनासाथ सबै राजी भए। भोलिपल्ट बगैचाका रक्षक गएर मैयांलाई राजपुत्र आएको समाचार दिए। उनले सुसारेलाई डाकेर भनिन्—हे सखी! सुन्यौ, मेरो अनुमानमा कुनै भाग्यले हारेको र कर्मले मारेको राजकुमार मेरो प्रेममा पागल भएर प्रश्नको उत्तर दिन भनी आएको होला। असल हो, त्यस्ता अनेक राजकुमारहरू आई उत्तर दिन नसकेर झ्यालखानमा कांदो दलिरहेका छन्। तिनैमा यौटा यो पनि हुन्छ! हिंड, जाऊँ र उसलाई पनि जितेर पिताजीको सभामा पठाइ दिउँ, अनि उतैबाट झ्यालखान कुनै जानेछ। सखीलाई यति भनेर आफू पनि सोह्र शृङ्गार गरेर स्वर्गको अप्सरालाई पनि परै बस भन्ने रूप बनाई सखीका साथै बगैचामा गई। त्यहां राजासित भेट भयो। अनि पद्मावतीले सोधिन्—राजन्! हजुर कहांबाट के इच्छा गरेर यहां आउनु भयो? अगाडी कहां जाने विचार छ, कुनै बाधा नभए सुनाउनोस्। राजाले उत्तर दिए—हे सुन्दरी पद्मावती! मैले तिम्रो रूप यौवनको जस्तो वर्णन सुनें, उस्तै देख्न पाएँ। म केवल तिमीसित बिवाह गर्ने इच्छाले आफ्नू राज्य छाडी अनेक कष्ट खप्दै आएर, यस बगैचामा डेरागरी बसेको हुँ अतः अब

तिमी पिताजीसित भनी मसित विवाह गर। यो मेरो प्रार्थना हो। मलाई निराश नपार।

राजा विजयसेनको कुरा सुनी पद्मावतीले भनिन्--हे राजन्! मेरो विवाह गरिदिने अधिकार मेरा पिताको अधिकारमा छैन। मेरो प्रतिज्ञा छ--मेरा दस प्रश्न छन्, जसले प्रश्नको उत्तर दिन सक्तैन, उसले झ्यालखानमा जीवन भरि कादो दल्नु पर्नेछ। यदि हजुरलाई यो कबोल मंजूर छ भने भन्नुहोस्, म आफ्नू प्रश्न भन्न तयार छु। मैले सबै सवालको उत्तर पाएँ भनें हजुरसित विवाह गर्नेछु, अन्यथा मेरो कैदी हुनु पर्नेछ। राजा विजयसेनले भने--मैयाँ! मैले तिम्रो प्रतिज्ञाका कुरा थाहा पाएँ र मलाई शर्त पनि मंजूर छ। अब तिमी आफ्ना प्रश्न भन, यति भने पछि तिनी भन्न लागिन् --

पहिलो प्रश्न --

को गर्दछन् तप सदा दृढ राखी माथ।
को स्नान गर्छ दिनहुँ अति भक्ति साथ॥
कस्ले समस्त रस सोस्तछ नित्य खान।
को साहसी छ भावना रस त्यो उगेलन॥

राजकुमारको उत्तर--

हुन् सूर्य नै तप निरन्तर गर्न सक्ने।
ब्रह्माजिलाई बुझ स्नान र दान गर्ने॥

हुन् भूमिले रस सबै पिइ पेट भर्न ।
हुन् मेघ नै रस सबै ऋतुमा ज्योरने ॥

दोस्रो प्रश्न—

हाँगा र पात नहुने बुझ वृक्ष कुन् हो ?
मन्ले चिताउन नसक्नु तलाउ कुन् हो ?
उड्ने सदैव नभमा विनु पंख के हो ?
मर्दछ काल नपुगीकन नित्य को हो ?

राजकुमारको उत्तर—

गर्व्हो तलाउ अरु नेत्र समास छैन ।
हाँगा र पात नहुने रूख 'धर्म' जान ॥
क्वै पंख छैन तर प्राण उडेर जाने ।
हो नींद काल नपुगी जनलाइ मार्ने ॥

तेस्रो प्रश्न—

पाउन्न पार ऋणबाट कदापि कस्ले ?
डुब्दैन को जलधिको जलमा कहीले ?
डढ्दैन को अनलमा परि त्यो बताऊ ।
खाँदैन काल बलि कस्कन यो बुझाऊ ॥

राजकुमारको प्रश्न—

सक्तैन तिर्न सुतले ऋण पितृको त्यो ।
डुब्दैन चित्त मन सिन्धुविषे बुझे यो ॥
पोल्दैन त्यो अनलले बुझ धर्मलाई ।
खाँदैन नामकन काल दिएँ बताई ॥

चौथो प्रश्न—

सानूमा गज तीसको जान्नू त्यसको रूप ।
तन्नेरीमा चार गज रूप अनूप ॥

बूढो गज साठको उल्टो हेर स्वरूप ।
के हो यो भन राम्ररी मनमा सोची खूब॥

राजकुमारको प्रश्न—

श्रीसूर्यको उदयमा गज तीस जान ।
मध्यान्हमा तरुण भो गज चार मान ॥
सन्ध्या हुँदा भइ बुढो गज साठि हेर ।
छाया बुझे शशिमुखी नगरी अबेर ॥

पाँचौं प्रश्न—

पानी परेर भर रात अपूर्व वृष्टि ।
सारा भिजेछ विधिको बन बाग सृष्टि ॥
पानी बिना तर डुबेन घड़ा कसैको ।
पंछी फिरे जल बिना ति बताउ के हो ?

राजकुमारको प्रश्न—

बर्षा सरी पृथिविमा भइ शीत वृष्टि !
त्यस्ले भिजेछ वन बाग समस्त सृष्टि ॥
डुब्दैन शीत लिई कांहि घड़ा कहीले ।
फर्कछ पंछि जल-पान बिना त्यसैले ॥

छैठौं प्रश्न—

रूओ समान हुलुको बुझ वस्तु के हो ?
आँखा नचिम्लिक न सुत्तछ जीव के हो ?
को सूर्य देखि पनि कीर्ति ठुलो भएको ।
संसारमा भन सुखी जन भन्नु को हो ?

राजकुमार प्रश्न—

'मान्नू' रुओ सरि हलो बुझ व्यक्ति हुन्छ ।
आँखा नचिम्लिकन मत्स्य सदैव सुत्छ ॥

सन्तोषले भजन गर्दछ जो प्रभूको ।
त्यस्कै छ कीर्ति भवमा रविझैं चलेको ॥

सातौं प्रश्न—

रात्री असाध्य सुमुखी तरुणी रहीछन् ।
दाँसेर अंग पतिका सँग सुत्न गैछन् ॥
निद्रित हुँदा पति मनैमन दुःख मान्छिन् ।
को हुन ? उठेर पतिलाई उठाइ खान्छिन् ॥

राजकुमारको उत्तर—

आँखा र बत्ति बुझ सुन्दर दम्पती हुन् ।
तिन्लाइ व्यक्ति सब दम्म मिलाइ राख्छन् ॥
ज्वाला निभाइ तपनि वर्तन मान्छ खुसी ।
जागे, जलाइ निलने पतिलाइ—चूसी ॥

आठौं प्रश्न—

कालो छ आकु रूपको पति उम्र कालो ।
उस्तै छ स्त्री पनि सधैं सुखमा छ जालो ॥
त्यस्तै कुपुत्र छ दिने दुई चार घुस्सा ।
माता-पिताकन, भयो तर डम्म फुस्सा ॥

राजकुमारको उत्तर—

कालो पिता छ बुझ तोप लड़ाइं गर्ने ।
पत्नी मुखै छ उहि बारुद हालि कोच्ने ॥
सुम्बी छ पुत्र त्यहि खान्छ र चार घुस्सा ।
तत्काल फायर गरे पछि ड्याम्म फुस्सा ॥

नवौं प्रश्न—

लगूर हैन तर पुच्छर खूब लामो ।
होटा छ सींग अरु नेत्र विचित्र त्यसको ॥

आकाशमा डुलिरहन्छ गरी निवास।
मीठो छ राग मन के चित्र सोचि खास॥

राजकुमारको उत्तर—

चंगा छ नाम उडि पुच्छर हुन्छ लामो।
छन् काठका सिग दुई अति छक्क लाग्दो॥
आकाश मै उडन पर्छ लटाइ घुम्दा।
मीठो सुनिन्छ अति राग बतास चल्दा॥

दुसौँ प्रश्न—

आश्चर्य के छ दुनियाँ भरमा घुमेको।
दाऊ छ कीतिर निभाउनलाइ त्यस्को॥
हाँस्नेछ मर्ख र सुविज्ञ त रुन्छ होला।
कस्को विचार छ सफा कुन बोक्छ झोला?

राजकुमारको उत्तर—

मर्छन् अनेक तर जीवित व्यक्ति हाँस्छन्।
मर्छु म निश्चय भनी मनमा न डर्छन्॥
आश्चर्य देखिकन विज्ञ त रुन्छ होला।
जस्को विचार ठिक हो उहि लिन्छ झोला॥

सुगाले भन्यो—हे मैना! यसरी विजयसेनले पद्मावतीका सबै प्रश्नको उत्तर दिएपछि पद्मावती प्रसन्न भई भन्दछिन्—हे राजकुमार! हजुरको उत्तरले म प्रसन्न भएँ, अब पिताजीलाई सबै कुरा सुनाई अनि आफ्नू वचन पूरा गर्नेछु। यति भनेर महलमा पुगी दासीद्वारा आफ्ना पितालाई खबर पठाइन्। राजा वज्रसेन त्यो समाचार सुनेर प्रसन्न भए। अनि मन्त्रीलाई पठाई बगैंचाबाट सम्मान

साथ विजयसेनलाई डाकी आफ्नू साथमा गद्दीमा बसाले अनि विजयसेनले भने--महाराज ! मैले राजकुमारीका दसै प्रश्नको उत्तर दिएँ। अब प्रतिज्ञा अनुसार राजपुत्री मलाई बक्सियोस। राजाले भने असल हो, अब म शुभ लग्न हेराई छोरीको विवाह हजुरसँग गरिदिन्छु। अनि विजयसेनले भने—हे राजन् ! वास्तवमा आफ्नू निम्ति यो कष्ट बोकेको होइन। केही दिन पहिले यहां योटा राजकुमार आएका थिए। तिनी मैयांका प्रश्नको उत्तर दिन नसकेर झ्यालखान परे तर कुनै युक्तिले ती झ्यालखानबाट भागेछन् र मैयांकै प्रेमका बन - बन डुल्दा - डुल्दै एक दिन मेरो राज्यमा आइपुगे र मसंग भेट भयो। अनि सारा कुरा बुझेपछि मैले 'तिम्रो विवाह तिनैसंग गराइदिनेछु' भनी प्रतिज्ञा गरेको छु। यसमा हजुरले पनि कुनै आपत्ति मान्नु पर्ने खण्ड छैन। विजयसेनको यस्ता कुरा सुनी राजाले प्रसन्न भएर भने--धन्य राजकुमार ! तपाईं जस्ता परोपकारी मानिस पाउन कठिन छ। अर्काको निम्ति यतिको कष्ट बोक्नु सहज काम होइन। मलाई यहाँको निर्णय स्वीकार छ। यति कुरा भएपछि विजयसेनले आफ्नू सुगालाई पठाई राजपुत्रलाई डाके। उनि आएपछि शुभ मुहूर्तमा पद्मावतीको विवाह ती राजपुत्रसित गराइदिए। अनि आफ्ना मित्र र राजासित विदा भई विजयसेन आफ्नू राज्यमा फर्के।

सुगाले भन्यो—हे मैना ! हेर, पुरुष भनेका कस्ता साहसी हुन्छन् । पद्मावती जस्ती स्त्री पाएर पनि अर्कीलाई दिनमा शंकोच मानेनन् । यसैले भनेको पुरुष जस्ता वचनका पक्का नारी हुन सक्तैनन् । अब यो कथा यहीं थामेर नारीको बेइमानीको वर्णन गर्दछु, सुन—राजकुमार र पद्मावतीले भोग विलास गर्दै निकै दिन वित्यो र एक दिन राजकुमारले आफ्ना ससुरासित भने—हे पिता ! मैले माता-पितालाई छाडेको धेरै भयो । अब विदा पाए घर जाने थिएँ । यति सुनेर वज्रसेन राजाले हुन्छ भनी यात्राको सामान, खर्च र दाइजो समेत धेरै सम्पति दिई केही पुर्‍याउने मानिस सहित लगाई छोरी ज्वाइँ विदा गरे । त्यहाँबाट हिंडेको केही दिनमा समुद्रका किनारमा पुगेर जहाजमा सामान र पत्नी समेत चढी प्रस्थान गरे । संयोगले निकै पर पुगेपछि ठूलो हुरी आयो र अकस्मात जहाजको टुक्रा-टुक्रा भयो, को डुब्यो, को बाँच्यो कसैले जान्न सकेन । राजकुमारलाई समुद्रको लहरले एकातिर किनारमा फ्याँकिदियो । पद्मावतीलाई जहाजका माझीहरूले धनको लोभमा बचाए र सारा गहना खोसेर त्यहीं अज्ञात टापूमा छाडिदिए । । पद्मावती भोक-प्यासको कष्ट सहँदै त्यहीं टापूमा यता-उता डुल्दैरहिन् । एक दिन चित्रकेतु नामको राजा शिकार खेलन त्यहीं वनमा आएको वखत अनिन्द्य सुन्दरी-

लाई देखी मनमनै विचार—यो घोर वनमा यो चन्द्रमुखी कहाँबाट आइपुगी। योसंग अरू कोही मानिस पनि छैन इत्यादि तर्क गर्दै नजीक आएर सोधे—हे सुन्दरी! तिमी को हौ कहाँबाट आयौ? एक्लै यो वनमा किन डुलिरहेकी छौ? मलाई मन्नमा बाधा छैन भने सबै विस्तारले सुनाउ। मबाट केही सेवा हुनसके अवश्य गर्नेछु। यति सुनी पद्मावतीले भनिन्—म राजा वज्रसेनकी छोरी र पद्मावती नाम हो। मेरो पति मलाई लिएर आफ्नू देश जाँदै थियौं, संयोगले समुद्रमा आँधी आई जहाज छिन्न-छिन्न भयो। मेरा स्वामी कता गए थाहा छैन। माझीहरूले मलाई बचाई भएको गहनाहरू खोसी यहीं छाडेर गए। त्यसै दिनदेखि म पतिको वियोगमा यहाँ घुमिरहेकी छु। यति सुनी चित्रकेतु भन्नलागे हे सुन्दरी! तिमीले अधीर हुनु पर्दैन। मसंग हिंड। म तिम्रो पतिको पनि पत्ता लगाउने छु। यहां तिमीलाई कुनै कष्ट हुँदैन। यति सुनी पद्मावती उनैका साथ गइन्। अनि यौटा राम्रो बगैंचामा महल बनाई राखे। अब पद्मावती र चित्रकेतुको हित-चित्त मिल्यो र दुवै जीवनको अपूर्व आनन्द भोग्न लागे।

सुगाले भन्यो—हे मैना! अब राजकुमारको विषयमा सुन—कुनै प्रकारले छेउ लागेपछि भोक-प्यास र पत्नीको वियोगमा घुम्दा-घुम्दा यौटा नगरमा आइपुगे। त्यहाँका

मानिसहरूले तिनको सबै कुरा बुझेपछि एक जना सज्जनले भने—हे युवक ! तिमीले चिन्ता गर्ने काम छैन। यदि तिमीलाई तिनै स्त्रीप्रति धेरै स्नेह छ भने यहाँ यौटा जान्ने ज्योतिषी छन्, तिनले आफ्नू प्रभाव द्वारा सबै बताइदिन सक्छन्। यति भनी उनैले ज्योतिषकहाँ लगिदिए र सबै स्थिति बताइसकेपछि ज्योतिषीले भने—हे परदेशी युवक ! तिम्री स्त्री अहिले दक्षिण दिशामा छन्। जसको लागि तिमी धेरै दुःखी छौ, ती यौटा बगैंचामा त्यसै देशको राजकुमारसित आनन्द भोग्दैछन्। तिनले आफ्नू सतीत्व पनि गुमाइसकेकी छन्। अतः अब तिमी त्यसको पछि दगुर्न छोडेर घर जाऊ, त्यसैमा कल्याण छ। ज्योतिषीले अरु पनि अनेक प्रकारले सम्झाए तर राजपुत्रको मनमा यौटा कुरा पनि बसेन र ज्योतिषीले बताएको स्थान खोज्दै निकै दिन पछि चित्रकेतुको नगरमा पुगेर सोध-पूछ गर्दा यौटी स्त्रीले उनलाई बताई—नाम त थाहा छैन, तर यहाँका राजकुमारले जंगलमा भेटेर यौटी सुन्दरीलाई चम्पाबाग भन्ने महलमा राखेका छन् भन्ने सुनेकी छु। तिनको कुरा सुनेर राजपुत्र चम्पाबागको ठेगाना सोध्दै त्यहाँ पुगेर बगैंचाको फाटकमै योगीको रूपमा आसन जमाएर बसे। चार दिनपछि डुल्न भनी पद्मावती बाहिर निस्किन् र राजपुत्रले देखेर मेरी प्रियतमा यिनै हुन् भन्ने निश्चय गरेर विरह व्यथा सुनाउन लागे—

हे प्यारी ! यसरी मलाइ तिमिले बिर्सी दिएकी किन ?
मेरो जे अपराध हो अब तिमी सारा बुझाई मन ॥
तिम्रो निम्ति अनेक कष्ट सहदै आएँ मिल्यो दर्शन ।
वाणी अमृत झैं सुनाउ अनि यो सन्तुष्ट होला मन ॥

राजपुत्रले त्यस्तो विलाप गरेको सुन्नासाथ पद्मावतीले आंखा घुमाएर हेर्नासाथ उनलाई चिन्ही हालिन् । अनि मनमा विचार गरिन्---यी त यहांसम्म पनि आइपुगे । अब के उपाय गरौं ? यदि म इनैसित जाऊँ भने पनि सतीत्वरूपी धन गुमाइसकें । अर्कासंग माया प्रीति बसिसकेपछि फेरि उसलाई पनि छलेर जानु अनुचित हो । बरु यिनलाई नै सम्झाइ-बुझाइ यहांबाट पठाइदिए असल होला । अरु उपाय पनि त छैन । यति सोचेर राजपुत्रलाई एकान्तमा लगेर भनिन्---हे राजकुमार ! हजुरलाई दुःखी देखेर म झन् दुःखी छु । तर के गर्नें ? मैले आफ्नू अमूल्य धर्म फालिसकें । अब हजुरले मलाई बिर्सिदिए नै हामी दुवैको कल्याण छ । यदि मेरो बात नमानेर केही गड़बड़ी गर्ने कोशिशमा लाग्ने हो भने म अहिले नै मेरा स्वामीलाई डाके छाला तर्न लाग्ने छु । होइन भने चुपचाप यहांबाट कसैले थाहा नपाउँदै गइहाल्नुस् । मेरा स्वामीले थाहा पाए भने हजुरको प्राण रहन्न । आफ्नी प्रियतमाको त्यस्तो निष्ठुर कुरा सुनी मुखले एक शब्द पनि नबोली बाहिर आई मनमनै आफूलाई

धिक्कार दिनलागे––हे ईश्वर ! जसको निम्ति राज-पाठ छाडी अनेक कष्ट सहें, के यो त्यसैको इनाम पाएको हुँ ! धिक्कार छ मलाई र मेरो बुद्धिलाई ! भगवन् ! मलाई क्षमा गर भन्दै आंसु बगाउँदै आफ्नू देश जाने बाटो समाए ।

सुगाले भन्यो––हे मैना ! यसै विषयको यौटा उदाहरण अर्को छ, ध्यान दिएर सुन–––यौटा चन्द्रावली नगरीमा बस्ने भद्रसेन नामको सेठ थियो र त्यसको स्त्रीको नाम रम्भा थियो । त्यो स्त्री रूप र यौवनमा आफू समान कसैलाई पनि ठान्दीनथी र पतिव्रता पनि थिई । एक दिन रम्भा र एक-दुई जना अन्य साथी लिई सेठ गंगा स्नान गर्न हिड्यो । उ बेला हिजो-आजको जस्तो यात्राका अनेक साधन नहुनाले हिंडेर गए । चार दिनको बाटो गएपछि एउटा जंगलमा डेरा गरेर बसे । त्यहां यौटा कामदेव झैं राम्रो, यौवन सम्पन्न साधु थियो । तर त्यो स्वभावको अत्यन्त दुष्ट थियो । रम्भाले त्यो साधुलाई देख्नासाथ आफ्नो हृदय समर्पण गरी । केही बेरपछि मीठो खानेकुरा बनाएर लगी र भनी–– महाराज ! मैले हजुरको निम्ति केही प्रसाद ल्याएकी छु, भोजन गर्नुहोस । साधु पनि रम्भाको रूप यौवनमा आकर्षित भएकै थियो, अतः उसले भन्यो––हे मानिनी ! यस्तो मीठो साधुको भोजनले सुख बरालिन्छ । हामी जस्ताले त सधैं पाइने वस्तु नै खानुपर्दछ । एक दिन खाएर केही लाभ छैन । अनि

रम्भाले भनी—महाराज ! मलाई आफ्नी दासी तुल्याउनु भए म यो भन्दा पनि उत्तम पक्वान्न खान दिनेछु। अनि साधुले भन्यो—तिमी आफ्नो धनी लोग्नेलाई छाडेर मेरी दासी बन्न किन तयार भयौ ? रम्भाले भनी—महाराज ! किन भन्ने कुरा छाडिदिनोस्। म आफ्नो इच्छाले हजुरको दासी बन्न तयार छु। साधुले भन्यो—लोग्ने छाडेर कसरी म कहाँ आउँछ्यौ ? रम्भाले भनी— लोग्ने सुतेपछि म आउने छु। यति भनेर डेरामा गई र लोग्ने निदाएपछि भएको झिटी-मिटी बोकेर साधुकहाँ पुगी। अनि साधुले भन्यो—तिमी त आयौ तर बिहान तिमीलाई मेरो पासमा देखेर तिम्रो लोग्नेले हामी दुवैलाई मिच्याउने छ। त्यसो हुनाले हामी अहिल्यै यहाँबाट गएर अन्तै बसौं। अनि रम्भाले भनी—महाराज ! मैले त आफ्नू तन मन सबै अर्पण गरिसकें, अब जे उचित लाग्दछ, त्यही गर्नुस्। यति भएपछि दुवै जना त्यहाँबाट हिंडेर यौटा पर्वतको गुफामा बसे। अनि साधु र रम्भाको भोग विलास अबाध गतिले चल्न लाग्यो।

यता प्रातःकाल भयो र रम्भाको पति स्वास्नीलाई नदेखेर चारैतिर खोज्न लाग्यो। जब केही पत्ता लागेन तब साथका मानिसहरूलाई विदा दिई आफू एक्लै हिंड्यो। योगीको जस्तै गेरुवा वस्त्र पहिरी स्थान-स्थानमा सोध-पूछ गर्दै एक दिन रम्भा बसेकै नगीच पुगेर परबाट देख्नासाथ

मनमनै विचार गर्न लाग्यो—हेर, चित्तले चित्तलाई चिन्दछ, जबदेखि यसको वियोगमा मैले गेरुवा लुगा लगाएँ, त्यसै बेमा देखि यसले पनि सबै शृङ्गार त्यागेर जोगिनीको भेष धारण गरिछ। मेरा वियोगमा यसको कपालको कस्तो दुर्गति भए छ, म त लट्टा परेको मात्र देख्दैछु। हे ईश्वर! मेरी रम्भा लाई यस्तो दुःख दिनु उचित थिएन। यस्तो विचार गर्दै अगाडि गयो।

रम्भा आफ्नो पतिलाई आउन लागेको देखेर आत्तिई त्यो साधुलाई भनो—अनर्थ भयो, त्यो मेरो पति त यहाँ पनि आइपुग्यो। त्यति सुन्नासाथ साधू हातमा लट्ठी लिएर दौडियो। दुबैको युद्ध हुन लाग्यो परस्पर मार्ने छिद्र खोज्दै लड्न लागे। त्यतिकैमा सेठले साधुलाई मार्न आँटेको देखेर रम्भा मोटा लट्ठी लिएर गई त्यस सेठको टाउकामा हिर्काई, त्यस चोटले त्यो मरेजस्तै भयो र साधूले लगेर नदीमा फालिदियो। त्यो सेठको शरीर बग्दै अलि पर गया। जलको चीसाले त्यो बाँचियो र नारी कस्ता बेइमान हुँदा रहेछन् भन्दै आफ्नू घर गयो।

यति भनिसकेपछि सुगा र मैनाको विवाद हुन लाग्यो। ऊ भन्ने पुरुष नजाती, ऊ भन्ने नारी नजाती। ठीक त्यसै-बेला मोटा हंस त्यहीं आइपुग्यो र तीनीहरूको झगड़ा सुनी भन्यो—हेर, दुवै पक्षले माने म तिमीहरूको झगड़ा छिनि-

दिन्छु । संसारमा जाति र नजाति दुबै थरीका जीव छन् ; अतः तिमीहरू परस्पर विवाह गरेर सुखमय जीवन विताओ, त्यति सुनेपछि हंसकोकुरा दुबैले स्वीकार गरेर असल मुहूर्तमा सुगा र मैनाको विवाह भयो । त्यसमा परेवाहरू मादल बजाउने भए । कोइलीहरू पनि अनेक थरिका बाजाहरू बजाउन थाले । भँगेरा, बाहुनी चरी आदि भोजको तयारीमा लागे । मयुरहरू नाच्न लागे । अरु पनि जगलका सबै चराहरूको सहयोगले सुगा र मैनाको बिवाह सम्पन्न भयो । दुबै आनन्दले रहनलागे । सुगा र मैना जस्तै हाम्रा पाठक पनि आनन्दले दिन बिताउन पाउन् भन्ने कामनाका साथ यो पुस्तक समाप्त गरियो ।

तोता-मैना कथाको आठौं भाग समियो ॥ ८ ॥

—०—

पुस्तक प्राप्ति स्थान
बम्बई पुस्तक भण्डार
कचौड़ीगली, वाराणसी